# वेदहरुलाई जानौँ

डा. विवेक आर्य

शिशु रोग विशेषज्ञ

प्रकाशक

आर्ष साहित्य प्रचार ट्रष्ट

४२७, गली मन्दिर वाली , नयाँ दिल्ली -११०००६

ईमेल : aspt.india@gmail.com

दूरभाष: ४३७८११९१ , ९६५०५२२७७८

अनुवादक

अविरल डिसी

# प्राक्कथन

कुनै आठ कक्षाको विद्यार्थीसँग वेद र आर्य विषयक प्रश्न सोधौं ,ऊ उत्तर दिनेछ आर्यहरु विदेशबाट आएका थिए, वेद गडरियहरुको गीत हो , वैदिक कालमा यज्ञमा पशुबलिको विधान थियो ,आर्यहरु सोमरसको नशा गर्थे , वेदहरुमा यम यमीका रुपमा भाइबहिनीको अश्लील संवाद छ । नारी र शूद्रहरु वेद पढने र सुन्ने अधिकारी हैनन् वेदहरुको विषयमा ९९ प्रतिशत सामान्य जनको यही मान्यता छ । वेदहरुको सत्य सन्देशलाई लिएर लगभग सम्पूर्ण मानव जाति अनभिज्ञ नै छ । यस्तो शोचनीय अवस्थाका दुई प्रमुख कारण छन् । प्रथम त वेदको सत्य ज्ञानसँग परिचित गराउने एक पनि वैकल्पिक पाठ्यक्रम हामीसँग उपलब्ध छैन । र दोस्रो त वेदविषयक भ्रान्तिहरुको अधिकाधिक  प्रचार भईरहेको छ । यसलाई त मनुष्य जाति माथिको अन्याय नै भन्नु पर्छ किनकि जहाँ विज्ञानको प्रगगि आफ्नो चरम उत्सर्गमा छ र जब टेलिविजन , इंटरनेट आदि सशक्त माध्यम उपलब्ध छन् तब वेदहरुलाई साधारण जनसम्म पुर्याउने कुनै दूरगामी एवं सार्थक प्रयास हामी देखिरहेका छैनौं ।

वेदहरुप्रति अश्रद्धा र अविश्वासले गर्दा हरेक वर्ष कति हिन्दु नास्तिक र विधर्मी भएर आफ्नो सार्थक जीवन व्यर्थ लुटाइ रहेका छन् । उनीहरु स्वयं त अंधकारमय जीवन बाँचिरहेका छन् भने अरुलाई भ्रमित गराएर उनीहरुको जीवन पनि नष्ट गरिदिन्छन् । यो पुस्तक लेख्नुको मूल उद्देश्य वेदहरुको विषयमा फैलिरहेको भ्रान्तिको निराकरण गरेर सत्य विद्याको अधिकाधिक प्रचार गर्नु रहेको छ जसद्वारा मानवको मनमा वेदहरुप्रति न केवल श्रद्धाको वृद्धि होस् किन्तु वेदहरुको महान् सन्देशको पालनद्वारा सबै मोक्षगामी बनून् ।

यस पुस्तकमा मैले स्वामी दयानन्दको एवं उनको वेदार्थ शैलीको अनुशरण गर्ने अनेक विद्वान्हरुको पुरुषार्थरुप साहित्यहरुको सरल , पुस्तक रुपमा संग्रह गर्ने प्रयास मात्र गरेको छु । सत्य सनातन वेदहरुको सन्देशलाई एक पुस्तकमा संकलित गर्नु असंभव कुरा हो किनकी जसरी ईश्वर अनंत छन् त्यसै उनको ज्ञान पनि अनंत छ । अझ पनि यस पुस्तकमा परिवर्धन र संशोधनको अपार संभावनाहरु छन् । विद्वान्हरुको आशीर्वाद एवं ईश्वरको अनुकम्पाले आउँदो संस्करणमा निश्चय नै वृद्धिको प्रयास गरिनेछ ।

मलाई यस पुस्तकको लेखनमा सबैभन्दा बढि सहयोग मेरा गुरु , मार्गदर्शक एवं शान्तिधर्मी मासिक पत्रिकाका संपादक श्री सहदेव आर्यजीको रहेको छ । उहाँकै प्रेरणाले म यस पुस्तकलाई अल्पकालमा पूर्ण गर्न सक्षम भए । श्री संजय आर्य जी , श्री तेजपाल आर्यजीले समय समयमा मलाई सहयोग दिएर मलाई कृतज्ञ बनाउनु भएको थियो । श्री धर्मपाल आर्यजी प्रधान दिल्ली आर्य प्रतिनिधि सभा एवं श्री विनय आर्यजीले प्रकाशनमा सहयोग गरेर मेरो मनोरथलाई सिद्ध गर्नमा मलाई सहयोग गर्नुभयो , म उहाँहरुको आभारी रहनेछु ।

अंतमा मेरी माता श्रीमती  संगीता आर्या एवं मेरी सहधर्मिणी डा. निधि आर्याप्रति हार्दिक आभार प्रकट गर्न चाहन्छु , जसले मलाई गृहस्थको कार्यबाट भारमुक्त गरेर यस पुस्तकको लेखनमा मार्ग प्रशस्त गर्नुभयो । ईश्वरसँग यही प्रार्थना छ कि मनुष्य जातिलाई वैदिक धर्मको पालन गरेर आयु , विद्या , यश र बलमा अपार उन्नति गर्न सहाय पुर्याऊन् ।

# १ के वेदहरुमा पशुबलि , माँसाहार आदिको विधान छ ?

वेदहरुको विषयमा अधिक प्रचलित भ्रान्ति यही हो कि वेदहरुमा पशुबलि , माँसाहार आदिको विधान छ । यस भ्रान्तिका मुख्य कारणहरू हुन् - पाश्चात्य विद्वान्हरू जस्तै म्याक्समुलर , ग्रिफ्फिथ आदि तथा मध्यकालका आचार्य जस्तै सायण , महीधर आदि द्वारा वेदहरूको गलत अर्थ गर्नु तथा ईशाई , मुसलमान आदि द्वारा तथा साम्यवादी अथवा नास्तिक विचारधाराका समर्थकहरूद्वारा भनेसुनेको कुरालाई बिना जाँचको बारम्बार रट्नु ।

कुनै पनि सिद्धान्तलाई अथवा कुनै पनि तथ्यलाई आँखा बन्द गरेर मान्नु विद्वान पुरुषको लक्षण होइन । हामी वेदका सिद्धान्तहरूको परीक्षा वेदका साक्षीद्वारा गर्नेछौं जसबाट हाम्रा भ्रान्तिहरूको निराकरण हुनेछ ।

शंका १ : के वेदहरूमा मांस भक्षणको विधान छ ?

समाधान : वेदहरूमा मांस भक्षणको स्वष्ट निषेध गरिएको छ । अनेक वेदमन्त्रहरूमा स्पष्ट रूपमा कुनै पनि प्राणीलाई मारेर खानुको स्पष्ट निषेध गरिएको छ । जस्तै -

हे मनुष्यहरू ! गाई आदि पशुहरू कहिल्यै पनि हिंसा गर्न योग्य छैनन् । - यजुर्वेद १.१

जो मानिसहरू प्राणी मात्रलाई आफ्नो आत्माको समान लिन्छन् र जसरी आफ्नो हित चाहन्छन् त्यही व्यवहार अन्यप्रति पनि राख्दछन् - उनीहरूलाई शोक आदि कहिल्यै प्राप्त हुँदैन । - यजुर्वेद ४०.७

चामल ( भात ) खाऊ , जौं खाऊ , उडद खाऊ तथा तिल खाऊ । तिम्रोलागि यिनै रमणीय भोजनका भाग हुन् । तिमी कुनै पनि भाले अथवा पोथीको हिंसा नगर । - अथर्ववेद ६.१४०.२

जो भाले अथवा पोथी , भ्रूण अथवा अण्डाको नाशबाट प्राप्त माँसुलाई काँचै वा पकाएर खान्छ , हामीले उनीहरूको विरोध गर्नुपर्छ । - अथर्ववेद ८.६.२३

निर्दोषहरूलाई मार्नु निश्चय नै महापाप हो , हाम्रा गाई , घोडा र पुरुषहरूलाई नमार । - अथर्ववेद १०.१.२९

यी मन्त्रहरूबाट स्पष्ट हुन्छ कि वेदहरूमा मांस भक्षणको निषेध छ ।

शंका २ : के वेदहरूका अनुसार यज्ञमा पशुबलिको विधान छ ?

समाधान: यज्ञको महत्ताको गुणगान गाउँदै वेदहरू भन्छन् कि सत्यनिष्ठ विद्वान् व्यक्तिहरूले यज्ञद्वारा नै पुजनीय परमेश्वरको उपासना गर्दछन् । " यज्ञो वै श्रेष्ठतमं कर्म " आदि आर्षवचनहरूका अनुसार यज्ञ कर्ममा सबै श्रेष्ठ धर्महरूको समावेश हुन्छ । यज्ञ शब्द जुन यज् धातुले बनेको छ , त्यसको अर्थ हुन्छ

देवपूजा , संगतीकरण तथा दान । यज्ञ नगर्नेहरूको लागि वेदमा भनिएको छ कि जो यज्ञमयी डुङ्गामा चढ्न असमर्थ हुन्छन् , उनीहरू कुत्सित , अपवित्र आचरणयुक्त भएर यही लोकको तलतल खस्छन् । वेदहरू यज्ञलाई परमेश्वरप्राप्तिको साधन बताउँछन् , जसमा हिंसा नाम नै छैन। वैदिक यज्ञमा पशुबलिको विधान भ्रान्त धारणा हो ।

यज्ञमा पशुबलिको धारणा मध्यकालको देन हो । प्राचीन कालमा यज्ञहरूमा पशुबलि प्रचलित थिएन । मध्यकालमा जब अवनतिको समय आयो तब मांसाहार , रक्सी आदिको प्रयोग प्रचलित भयो । आफ्ना आफ्ना मत-मतान्तरका अनुचरहरूले आफ्नो आफ्नो वेद भाष्य बनाएर वेदमा मांसाहार , पशुबलि ; गाई, घोडा , साँडे आदिको बलि गर्ने विधान प्रचारित गरे , जसलाई देखेर मैक्समूलर , विल्सन , ग्रिफ्फिथ आदि पाश्चात्य विद्वान्हरूले वेदहरूमा मांसाहारको प्रचूर प्रचार गरेर न केवल पवित्र वेदहरूलाई कलंकित गरे , किन्तु लाखौ निर्दोष पशुहरूको हत्या गरेर मनुष्य जातिलाई नै पापी बनाए । मध्यकालमा भारतमा वाममार्गको प्रचार भएको थियो जसले मांस , मैथुन , मदिरा , मीन ( माछा ) आदिबाट मोक्ष प्राप्ति हुने विश्वास गर्थे । आचार्य सायण आदि त विद्धान् त थिए तर वाममार्गको प्रभावमा आएर वेदहरूमा मांस भक्षणको विधान दर्साउन पुगे । निरीह प्राणीहरूको यस किसिमको विभत्स हत्या देखेर महात्मा बुद्ध एवं महावीरले वेदहरूलाई हिंसाले लिप्त ठानेर वेदहरूलाई अमान्य घोषित गरिदिए जसका कारण वेदहरूको धेरै हानी भयो र अवैदिक मतहरूको प्रचार भयो । क्षत्रिय धर्मको नाश हुनाले देशले गुलामी सहनु पर्यो । वेदहरूमा मांसभक्षणको विधानको गलत प्रचारको कारण देशले कतिको हानी बेहोर्नु पर्यो , यसको अनुमान लगाउन सकिन्न । कहाँ वेदहरूको जीव रक्षा र निरामिष भोजनको आदेश र कहाँ त्यसको विपरीत पशु आदिको यज्ञहरूमा बलि ? प्राचीन आर्ष भाष्यमा मांस भक्षण , पशुबलि आदिको लेश पनि छैन । स्वामी दयानन्दले वेदहरूको भाष्य गरेर यस भ्रान्तिको निवारण गर्नुभयो , तर जो वेदको विरोध गरेर नै खान्छन् , उनीहरूको उपाय छैन किनकी उनीहरूको उद्देश्य नै वेदहरूको प्रतिष्ठा कम गर्नु हो ।

वेदहरूमा यज्ञको लागि अध्वर शब्दको प्रयोग भएको छ ,जसको अर्थ निरुक्त अनुसार 'हिंसा रहित कर्म ' हो ।

वेदका केही मन्त्रार्थहरू द्रष्टव्य छन् -

हे ज्ञान स्वरूप परमेश्वर ! तपाई हिंसा रहित यज्ञहरूमा मात्रै व्याप्त हुनुहुन्छ र यस्तै नै यज्ञहरू विद्वान् सत्यनिष्ठ व्यक्तिहरू सदा स्वीकार गर्छन् । - ऋग्वेद १.१.४

यज्ञको लागि अध्वर शब्दको प्रयोग ऋगवेद १.१.८ , १.१४.२१, १.१२८.४ ,१.१९.१ , ३.२१.१ , सामवेद २.४.२ , अथर्ववेद १.४.२ इत्यादि मन्त्रहरूमा यसप्रकारले भएको छ । अध्वर शब्दको प्रयोग चारै वेदका अनेक मन्त्रहरूमा हुनुले यो सिद्ध गर्छ कि यज्ञमा हिंसा कर्म निषिद्ध छ । त्यसमा त झन् पशुबलिको त झन् कुरै उठ्दैन ।

हे प्रभु ! मलाई सबै प्राणीहरू मित्रको दृष्टिले हेरून् , म सबै प्राणीहरूलाई मित्रको दृष्टिले हेरूँ । हामी सबै एक-अर्कालाई मित्रको दृष्टिले हेरौं । -यजुर्वेद ३६.१८

यजुर्वेद १.१ मा यज्ञलाई श्रेष्ठतम् कर्मकोरूपमा लिँदै पशुरक्षाको उपदेश गरेको छ ।

यजुर्वेद ६.११ मा पति-पत्नीलाई उपदेश दिइएको छ कि पशुहरूको रक्षा गरून् ।

हे मनुष्य तिमी दुई खुट्टावाला अर्थात्  अन्य मनुष्य एवं चार खुट्टावाला अर्थात् पशुहरूको रक्षा गर्ने गर । - यजुर्वेद १४.८

शंका ३ -के वेदहरूमा वर्णित अश्वमेध , नरमेध , गोमेधमा घोडा , मनुष्य , गाईहरूको यज्ञमा बलि दिने विधान छैन र ?

समाधानः मेध शब्दका तीन अर्थ छन् : १. मेधा अथवा शुद्ध बुद्धिलाई बढाउनु , २. मान्छेहरूमा एकता अथवा प्रेमलाई बढाउनु ,३.हिंसा । यसकारण मेध शब्दले केवल हिंसा अर्थको ग्रहण उचित छैन । जब यज्ञलाई अध्वर अर्थात हिंसा रहित भनियो भने मेधको अर्थ हिंसा कसरी लिन सकिन्छ ? बुद्धिमान् व्यक्ति मेधावी भनिन्छन् । यस तरिकाले स्त्रीहरुको नाम मेधा , सुमेधा इत्यादि राखिन्छ , तब के यी नामहरु उनीहरु हिंस्रक भएकाले राखिएको हो या बुद्धिमान भएका कारण ?

अश्वमेध यज्ञको अर्थ यज्ञमा घोडाको बलि दिनु हैन । शतपथ ब्राह्मण १३.१.६.३ तथा १३.२.२.३ का अनुसार राष्ट्रको गौरव , कल्याण र विकासका लागि गरिने सबै कार्य ‘ अश्वमेध ’ हुन् ।

गोमेधको अर्थ यज्ञमा गाईको बलि दिनु होइन बरु अन्नलाई दुषित हुनबाट बचाउनु , आफ्ना इन्द्रियलाई वशमा राख्नु , धर्तीलाई सफा राख्नु - ‘ गोमेध ’ यज्ञ हो किनकी गो शब्दको अर्थ अन्न , इन्द्रिय , सूर्यको किरण , पृथ्वी आदि हुन् ।

नरमेधको अर्थ मनुष्यको बलि दिनु होइन बरु मनुष्यको मृत्यु पछि उसको शरीरलाई वैदिक रीतिपूर्वक दाहसंस्कार गर्नु नरमेध यज्ञ हो । मनुष्यहरुलाई उत्तम कार्यको प्रशिक्षित एवं संगठित गर्नु पनि नरमेध यज्ञ या पुरुषमेध या नृपमेध यज्ञ हो ।

अजमेधको अर्थ खसीबोकाको बलि दिनु होइन बरु अजको अर्थ हुन्छ बीज , अनाज या धान आदि । यसप्रकार कृषिको उब्जनी बढाउनु अजमेध हो । यसको सीमित अर्थ धान आदिको आहुति दिनु पनि हो ।

शंका ४: यजुर्वेद मन्त्र २४.२९ मा ‘ हस्तिन आ लभते ’ अर्थात हात्तीहरुलाई मार्ने विधान छ ?

समाधानः ‘ लभ्’ धातुबाट बन्ने आलम्भ शब्दको अर्थ मार्नु हैन परन्तु राम्ररी प्राप्त गर्नु , स्पर्श गर्नु या दिनु हो । हस्तिन शब्दको अर्थ यदि हात्ती लिने हो भने यस मन्त्रमा राजाले आफ्नो राज्यको विकासको लागि हात्ती आदि प्राप्त गर्नु , आफ्नो सेना सुदृढ गर्नु आदि बताइएको छ । यहाँ हिंसाको कुनै विधान छैन ।

पारस्कर गृह्य सूत्र २.२.१६ मा बताइएको छ कि आचार्य ब्रह्मचारीको हृदयको स्पर्श गर्छन् । यहाँ आलम्भ शब्दको स्पर्श अर्थ आएको छ ।

यदि यहाँ आलम्भ शब्दको अर्थ मार्नु गर्ने हो भने कसरी मार्नु भन्ने अर्थको ग्रहण युक्तिसंगत या तर्कसंगत सिद्ध हुन्छ ?

शंका ५ : वेद , ब्राह्मण एवं सूत्र ग्रन्थमा संज्ञपन शब्द आएको छ जसको अर्थ पशुलाई मार्नु हो ?

समाधान : संज्ञपन शब्दको अर्थ ज्ञान दिनु , दिलाउनु तथा मेल गराउनु हो । अथर्ववेद ६.१०.१४ - १५ मा लेखिएको छ कि तिम्रो मनको ज्ञानपूर्वक राम्ररी ( संज्ञपन ) मेल होस् , तिमीहरुका हृदयहरुको राम्ररी ( संज्ञपन ) मेल होस् ।यसै प्रकारले शतपथ ब्राह्मण १.४ मा एक आख्यानिका छ , जसको अर्थ हो - म वाणी त मन भन्दा अधिक राम्री छु , त जे पनि मनमा चिन्तन गर्छस् म उसलाई प्रकट गर्छु , म त्यसलाई राम्ररी अरुलाई जनाउँछु ( संज्ञपयामि ) । यसरी संज्ञपन शब्दको मेलको स्थानमा हिंसापरक अर्थ गर्नु अज्ञानताको परिचय हो ।

शंका ६ : वेदहरुमा आएको ‘ गोघ्न ’ शब्दको सिधा अर्थ - गाईलाई मार्नु , अर्थात गाईको वध गर्ने आदश हो ?

समाधान : गोघ्न शब्दमा हन् धातुको प्रयोग भएको छ , जसका दुई अर्थ छन् - हिंसा र गति । गोघ्नमा गति अथवा ज्ञान , गमन , प्राप्ति विषयक अर्थ रहेको छ । मुख्य भाव यहाँ प्राप्तिको छ , अर्थात जसबाट उत्तम गाईहरु गराइयून् ।

हिंसाको प्रकरणमा वेदको उपदेश गाईको उपदेश गाईको हत्या गर्नेहरुबाट टाढा रहने रहेको छ । ऋग्वेदका १.११४.१० मा लेखिएको छ कि जो गोघ्न = अर्थात गाईको हत्या गर्ने व्यक्ति छ , ऊ नीच पुरुष हो , ऊ तिमीबाट टाढा रहोस् । वेदहरुका धेरै उद्धरणहरुबाट पनि ज्ञात हुन्छ कि ‘ हन् ’ को प्रयोग कसैको निकट जान या समीप पुग्नको लागि पनि गरिन्छ । अथर्ववेद ६.१०१.१ मा पतिलाई पत्नीको समीप जाने उपदेश छ । यस मन्त्रमा यो अर्थ - पति पत्नीको समीप जाओस् , हुन्छ न कि पतिले पत्नीलाई मारोस् । त्यसैले हननको केवल हिंसा अर्थमा प्रयोग भ्रम फैलाउन बाहेक अरु केही होइन ।

शंका ७ : वेदहरुमा अतिथिलाई गाई आदिको मासु पकाएर खुवाउने आदेश छ ?

समाधान : ऋग्वेदको मन्त्र १०.६८.३ मा अतिथिनीर्गाः को अर्थ अतिथिहरुको लागि गाई भन्ने गरिएको छ । वेदका विरोधीहरु यसको यो तात्पर्य लिन्छन् कि कुनै प्रतिष्ठित व्यक्ति आएपछि गाईलाई मारेर त्यसको माँसुले अतिथिलाई तृप्त गराइन्थ्यो । यहाँ जुन भ्रम आएको छ , त्यो अतिथिनी शब्दलाई बुझ्नमा गल्ती भएर हो । यहाँ यसको उचित अर्थ हो - यस्ता गाईहरु जो अतिथिहरु समीप दानार्थ ल्याइन्छन् , तिनलाई दान गरियोस् । Monier William ले आफ्नो संस्कृत अंग्रेजी शब्दकोशका अतिथिग्वको अर्थ "To whom guests should go " (P-14) अर्थात ‘ जसको समीप अतिथिहरु प्रेमवश जाऊन् ’ गरेका छन् । श्री Bloomfield यसको अर्थ "presenting cows to guests" अर्थात अतिथिहरुलाई गाई भेंट गर्नेवाला गरिएको छ । अतिथिहरुलाई गाईको मासु पस्किने काम कपोलकल्पित हो ।

शंका ८ : वेदहरुमा साँढेहरुलाई मारेर खाने आदेश छ ?

समाधान : यो पनि भ्रान्ति छ कि वेदमा साँढेहरुलाई मारेर खाने विधान छ । वेदहरुमा जस्तै गाईहरुका लागि अघ्न्या शब्दको प्रयोग गरिएको छ , त्यसै प्रकारले साँढेको लागि पनि अघ्न्या शब्दको प्रयोग गरिएको छ । यजुर्वेद १२.७३ मा अघ्न्या शब्दको प्रयोग साँढेका लागि गरिएको छ । यसको पुष्टि सायणाचार्यले काण्वसंहितामा गरेका छन् ।

त्यसैप्रकारले अथर्ववेद ९.४.१७ मा लेखिएको छ कि साँढेले सिंगद्वारा आफ्नो रक्षा गर्छ परन्तु मानव समाजले पनि यसको रक्षामा भाग लिनुपर्छ । अथर्ववेदको ९.४.१९ मंत्रमा साँढेका लागि अघ्न्य र गाईको लागि अघ्न्या शब्दको प्रयोग भएको छ । यहाँ लेखिएको छ कि ब्राह्मणहरुलाई ऋषभको दान गरेर दाता आफ्नो स्वार्थको परित्यागद्वारा श्रेष्ठ बन्दछ । ऊ आफ्ना गौशालामा साँढेहरु र गाईहरुको पुष्टि देख्दछ ।

अथर्ववेद ९.४.२० मंत्रमा भनिएको छ कि जो सत्पात्रमा वृषभ ( साँढे ) को दान गर्दछ , उसका गाई र सन्तानहरु उत्तम रहन्छन् ।

यी उद्धरणहरुबाट यो सिद्ध हुन्छ कि गाईहरु सँगै साँढेहरुको रक्षाको सन्देश पनि वेदहरु दिन्छन् ।

शंका ९ : वेदहरुमा वृद्ध गाई तथा साँढेहरु ( उक्षा ) मार्ने विधान छ ?

समाधान : शंकाको कारण ऋग्वेद ८.४३.११ मंत्रमा अनुसार वन्ध्या गाईहरुको अग्निमा आहुति दिने विधान बताइन्छ । यो अर्थ सर्वथा अशुद्ध हो । यस मन्त्रको वास्तविक अर्थ निघन्टु ३.३ का अनुसार यो हो कि जसरी महान् सूर्य आदि पनि जसको प्रलयकालमा ( वशा ) अन्न वा भोज्यका समान हुन्छन् । यसको शतपथ ५.१.३ का अनुसार अर्थ हो कि पृथ्वी पनि जसको ( वशा ) अन्नका समान भोज्य छ , यस्ता परमेश्वरलाई नमस्कारपूर्वक स्तुतिहरुद्वारा सेवा गर्छौं । वेदहरुका विषयमा यस किसिमका भ्रान्ति हुनुका मुख्य कारण वशा , उक्षा , ऋषभ आदि शब्दको अर्थ बुझ्न नसक्नु नै हो ।

यज्ञ प्रकरणमा उक्षा र वशा ,यी दुवै शब्दको औषधीपरक अर्थ छ , जसलाई अग्निमा हालिन्छ । सायणचार्यका एवं मोनियर विलियम्सका अनुसार उक्षा शब्दको अर्थ सोम , सूर्य , ऋषभ नामक औषधी हुन् ।

वशा शब्दको अन्य अर्थ अथर्ववेद १.१०.१ को अनुसार ईश्वरीय नियम वा नियामक शक्ति हो । शतपथ १.८.३.१५ का अनुसार वशाको अर्थ पृथ्वी पनि हो । अथर्ववेद २०.१०३.१५ का अनुसार वशाको अर्थ संतानलाई वशमा राख्ने उत्तम स्त्री पनि हो ।

यस सत्यार्थलाई नबुझेर वेद मन्त्रहरुको अनर्थ गर्नु निन्दनीय हो ।

शंका १० : वेदादि धर्म ग्रन्थहरुमा माष शब्दको उल्लेख छ , जसको अर्थ मासु खानु हो ?

समाधान : माष शब्दको प्रयोग ‘ माषोदनम् ’ को रुपमा भएको छ । यसलाई बदलेर कुनै मांसभक्षीले मांसोदनम् अर्थ गरिदिएको छ । यहाँ माष एक दालका रुपमा वर्णित छ । यहाँ त मांसको त प्रश्न नै उठ्दैन । आयुर्वेद ( सुश्रुत संहिता शरीर अध्याय २ ) गर्भवती स्त्रीहरुको लागि मांसाहारको स्पष्छ निषेध गर्दछ र उत्तम सन्तान पाउनको लागि माष सेवनलाई हितकारी भन्छ । यसबाट के स्पष्ट हुन्छ ? यही स्पष्छ हुन्छ कि माष शब्दको अर्थ मांसाहार होइन बरु दाल आदि खाने आदेश छ । त्यही पनि यदि कोही माषलाई मांस नै भन्न चाहे , मांसको निरुक्त ४.१३ को अनुसार मनन साधक , बुद्धिवर्धक र मनलाई प्रिय लाग्ने वस्तु जस्तै फलको गुदी , खिर आदिलाई भनिएको छ । प्राचीन ग्रन्थहरुमा मांस अर्थात गुदी आदि खाने अनेक प्रमाण भेटिन्छन् । जस्तै चरक संहितामा आम्रमांसं ( आपको गुदा ) , खजुरमांसं ( खजुरको गुदा ) आदि । तैत्तिरिय संहिता २.३२.८ मा दही , मह र धानलाई मांस भनिएको छ ।

यसबाट यही सिद्ध हुन्छ कि वेदादि शास्त्रहरुमा जहाँ माष शब्द आएको छ अथवा मांसको रुपमा जसको प्रयोग भएको छ , त्यसको अर्थ दाल अथवा फलहरुको मध्य भाग अर्थात गुदी हो ।

शंका ११ : वेदहरुमा यज्ञमा घोडाको बलि दिने र घोडाको मासु पकाउने आदेश छ ?

समाधान : यजुर्वेदको २५ औ अध्यायमा सायण , महीधर , उव्वट , ग्रिफ्फिथ , म्याक्स मुलर आदिले अश्व हिंसापरक अर्थ गरेका छन् । यसको मुख्य कारण वाजिनम् शब्दको अर्थ न बुझ्नु नै हो । वाजिनम्को घोडा सँगसँगै अन्य अर्थहरु पनि छन् जस्तै शूर , बलवान् , गतिशील र तेज ।

यजुर्वेदको २५.३४ मंत्रको अर्थ गर्दै सायणजी लेख्नुहुन्छ कि अग्निले पकाइएको , मरेको तेरो अवयवहरुबाट जुन मांस-रस निस्कन्छ , त्यो भूमिमा या तृणमा नखसोस् , त्यो इच्छा गर्ने देवहरुलाई प्राप्त होस् । यस मन्त्रको अर्थ स्वामी दयानन्दजी गर्नुहुन्छ कि - हे मनुष्य , जो ज्वर आदिले पीडित अंग छ , ती वैद्यहरुद्वारा निरोग गराइनुपर्छ , किनकी ती वैद्यजनहरुबाट जुन औषधी दिइन्छ त्यो रोगीहरुका लागि हितकारी हुन्छ एवं मनुष्यहरुले व्यर्थ वचनहरुको उच्चारण गर्नुहुदैंन बरु विद्वानहरुप्रति उत्तम वचनहरुको मात्र प्रयोग गर्नुपर्छ । अश्वको हिंसाको विरुद्ध यजुर्वेद १३.४७ मन्त्रमा शतपथकारले अर्थ लेखेका छन् कि अश्वको हिंसा नगर्नू ।

यजुर्वेदको २५.४४ मा यज्ञमा घोडाको बलिको समर्थन गर्दै सायणाचार्य लेख्नुहुन्छ कि हे अश्व ! त अरु अश्वहरु जसरी मर्दैनस् किनकी तलाई तलाई देवत्व प्राप्ति हुनेछ र न हिंसित हुनेछ किनकी व्यर्थ हिंसाको यहाँ अभाव छ । प्रत्यक्ष रुपमा अवयवहरु ( अङ्ग ) को नाश हुँदाखेरि यस्तो कसरी भन्छौ ? यसका उत्तर दिन्छौं कि सुन्दर देवयान मार्गहरुबाट त देवहरुलाई प्राप्त हुनेछस् , त्यसैले यहाँ हाम्रो कथन सत्य छ । परन्तु स्वामी दयानन्द यस मन्त्रको अर्थ यसप्रकार गर्नु हुन्छ कि जसरी विद्याले राम्ररी प्रयुक्त अग्नि , जल, वायु इत्यादिले युक्त रथमा स्थित भएर मार्गहरुबाट सुखपूर्वक गइन्छ , त्यसैगरि आत्मज्ञानद्वारा आफ्नो स्वरुपलाई नित्य जानेर मरण र हिंसाको डरलाई छोडेर दिव्य सुखहरुलाई प्राप्त होऊ ।

पाठकहरु आफै विचार गरून् । कहाँ स्वामी दयानन्दद्वारा गरिएको सच्चा अर्थ र कहाँ सायण आदिको हिंसापरक अर्थ । यी दुईमा आकाश-पातालको फरक छ । यस्तै भेद वेदका ती सबै मन्त्रहरुमा छ जसको हिंसापरक अर्थ गरिएको छ । अतः ती मान्न योग्य छैनन् ।

शंका १२ : के वेदहरुका अनुसार इन्द्र साँढे खान्छन् ?

समाधान : इन्द्रद्वारा साँढे खाने समर्थनमा ऋग्वेदको १०.२८.३ र १०.८६.१४ मन्त्रहरुको उद्धरण दिइन्छ । यहाँ वृषभ र उक्षन् शब्दको अर्थबाट अनभिज्ञहरुले यिनको अर्थ साँढे गरिदिए । ऋग्वेदको लगभग २० स्थलहरुमा अग्निलाई , ६५ स्थलहरुमा इन्द्रलाई , ११ स्थलहरुमा सोमलाई , ३ स्थलहरुमा पर्जन्यलाई , ५ स्थलहरुमा रूद्रलाई वृषभ भनिएको छ । व्याख्याकारहरुका अनुसार वृषभको अर्थ यज्ञ हो । उक्षन्को अर्थ ऋग्वेदमा अग्नि , सोम , आदित्य , मरुत आदिको लागि प्रयोग गरिएको छ । जब वृषभ र उक्षन् शब्दहरूका यति धेरै अर्थ वेदहरुमा गरिएका छन् भने व्यर्थ नै साँढे अर्थ गरेर त्यसलाई इन्द्रलाई खुवाउनु युक्तिसंगत एवं तर्कसंगत छैन ।

यसै सन्दर्भमा ऋग्वेद २.५२.१ मा इन्द्रको भोज्य पदार्थ निरामिष धान , पुरोडाश तथा पेय सोमरस हुन् न कि साँढे ।

शंका १३ : वेदहरुमा गाईको कुन स्थान छ ?

समाधान : यजुर्वेद ८.४३ मा गाईको नाम इडा , रन्ता , हव्या ,काम्या , चन्द्रा , ज्योति , अदिति , सरस्वती , मही , विश्रुति र अघ्न्या भनिएको छ। स्तुतिको पात्र भएकाले इडा , रमयित्री भएकाले रन्ता , यसको दूधको आहुति यज्ञमा दिन मिल्ने भएकाले हव्या , इच्छित भएकाले काम्या , हृदयलाई नै प्रसन्न गर्ने भएकाले चन्द्रा , अखण्डनीय हुनाले अदिति , दुग्धवती भएकाले सरस्वती , महिमशालिनी भएकाले मही , विविध रुपमा श्रुत भएकीले विश्रुति तथा मार्न निषेध गरिएकी हुनाले अघ्न्या कहलिन्छन् ।

अघ्न्या शब्दमा गाईको वध गर्नबाट निषेध यति स्पष्ट छ कि विदेशी लेखकहरुले पनि यसलाई स्वीकार गरेका छन् ।

हे गाईहरु , तिमीहरु पुज्य छौ , तिमीहरुको पुज्यता म पनि प्राप्त गरूँ । - यजुर्वेद ३.२०

म समझदार मनुष्यहरुलाई भनिदिन्छु कि तिमी बिचारी गाईको हत्या नगर । यी अदिति हुन् , काट्न - चिर्न योग्य हैन । - ऋग्वेद ८.१०१.१६

ती देवी गाईलाई मनुष्यले अल्प बुद्धि भएर मार्ने - काट्ने नगरून् । - ऋग्वेद ८.१०१.१६

निरपराधको हत्या बढी भयंकर हुन्छ , अतः तिमी हाम्रा गाई , घोडा र पुरुषलाई नमार । - अथर्ववेद १०.१.२९

गाईहरु वधशालामा नजाऊन् । - ऋग्वेद ६.२८.४

गाईको वध नगर । - यजुर्वेद १३.४३

ती मनुष्य मूर्ख हुन् जो कुकुरद्वारा वा गाईका अंगहरुद्वारा यज्ञ गर्छन् । - अथर्ववेद ७.५.५

शंका १४ : वेदहरुमा गाईको हत्या गर्नेहरुका लागि के विधान छ ?

समाधान : वेदहरुमा गाईका हत्याराका लागि कठिन दण्डको विधान छ ।

जो गाईको हत्या गर्छ , उसलाई मृत्यु दण्ड दिनुपर्छ । - यजुर्वेद ३०.१८

हे गाईहरु ! तिमीहरु प्रजाहरुले सम्पन्न भएर उत्तम घाँसवाला चरनभूमिमा सुखपूर्वक चरन गर । सुखपूर्वक जल पिउन सकिने जलाशयहरुबाट जल पिओ । चोर र घातकहरु तिम्रा स्वामी बन्न नसकून् , क्रूर पुरुषको शस्त्र पनि तिमीहरुमाथि नपरोस् । - अथर्ववेद ४.२१.७

गाई हत्या गर्नेहरुका लागि स्पष्टसँग भनिएको छ कि यदि तिमीले हाम्रा गाई , घोडा आदि पशुहरुको हत्या गर्यौभने हामी तिमीलाई सिसाको गोलीले हान्छौं । - अथर्ववेद १.१६.४

वेदहरुमा गौहत्यामा मृत्यु दण्डको विधान भए पनि मध्यकालमा यज्ञमा पशुबलि प्रचलित हुनुको कारण राजाहरु संस्कृत एवं वेद ज्ञानबाट अनभिज्ञ हुनु थियो । दण्ड दिने कर्त्तव्य राजाको हो तर जब राजालाई गाई हत्यारालाई दण्ड दिने विधान सिखाइएन भने राजाले के दण्ड दिन्थे ? यसको विपरीत यो सिखाइयो कि होममा बलि दिइएको पशु स्वर्ग जान्छ ।

सत्य यही हो कि यज्ञमा कुनै पनि पशुको बलि दिने विधान वेदहरुको सत्य उपदेशको विपरीतको कुरा हो एवं मध्यकालमा प्रचलित जे-जति पनि काम थिए ती सबै वेदहरुको मनमानी अर्थ गरिनुको परिणाम हो जो त्याग गर्न योग्य छ । एकातिर भारतीय आचार्यहरु वाममार्गीहरुको प्रभावमा आएर वेदहरुमा मांसभक्षणको समर्थनलाई घोषित गर्न इच्छुक थिए भने अर्कोतिर विदेशी चिन्तकहरु आफ्नो मतान्धताको जोसमा स्वार्थपूर्तिको लागि वेदहरुको निन्दक अर्थ निकाल्दै थिए जसबाट भारतीय जनमानसमा वेदहरुप्रतिको श्रद्धा समाप्त होस् र उनीहरुको मार्ग प्रशस्त होस् । धन्य हुन् स्वामी दयानन्द जसले आफ्नो दुरदृष्टिले न केवल यो षड्यन्त्रलाई जाने बरु निराकरणहेतु वेदहरुको उचित भाष्य पनि गरे । हामी सबै ऋषि दयानन्दको यस उपकारका लागि आभारी हुनुपर्छ ।

जातिवाद सभ्यसमाजको मुहारमा एक कलंक नै हो जसका कारण मानव मानवका लागि न केवल असंवेदनशील बनेको छ किन्तु शत्रु समान व्यवहार पनि गर्न थालेको छ । समस्त मानव जाति ईश्वरका सन्तान हुन् । तर यो तथ्य जान्दा जान्दै पनि छुवाछुतको नाममा , ठुलो-सानोको नाममा एक-अर्काप्रति भेदभावको भाव अज्ञानताको बोधक हो ।

केही मानिसहरूको विश्वास छ कि जातिवादको मूलकारण वेद र मनुस्मृति हुन् । परन्तु वैदिक-कालमा जातिवादको र छुवाछुतको अस्तित्वलाई त विदेशी लेखकहरु पनि स्पष्ट रूपमा नकार्छन् ।

वैदिका कालमा वण व्यवस्था प्रधान थियो , जसअनुसार जस्तो जसको गुण त्यस्तै उसको कर्म र जस्तो जसको कर्म उस्तै उसको वर्ण । जातिवाद नामक विष वृक्षका कारण हाम्रो समाजले धेरै अभिशाप झेल्नु परेको छ । जातिवादका कारण आपसी मतभेदहरुमा वृद्धि भयो , सामाजिक एकता र संगठनको नाश भयो जसका कारण विदेशी आततायीहरुले हामीलाई सहजै निशाना बनाए । एक संकीर्ण दायरामा वरवधूको मिलान नभएपछि बेमेलका विवाहको आरम्भ भयो जसको परिणाम स्वरूप दुर्बल एवं गुण रहित सन्तानहरू जन्मिए । आपसी मेल नभएपछि विद्या , गुण , संस्कार , व्यवसाय आदिको उन्नति पनि रोकियो ।

शंका १ : जाति , वर्णमा के अन्तर छ ?

समाधान : जातिको अर्थ हो उद्भवको आधारमा गरिएको वर्गीकरण । न्याय सूत्रको २.२.७१ मा लेखिएको छ कि ‘ समानप्रसवात्मिका जातिः ’ अर्थात जसको प्रसव अर्थात जन्मको मूल समान छ अथवा जसको उत्पत्तिको प्रकार एकै जस्तो तिनीहरुको एक जाति हुन्छ ।

आकृतिर्जातिलिङ्गमाख्या : न्याय दर्शन २.२.६५ अर्थात् जो व्यक्तिहरुको आकृति ( इन्द्रियादि ) एक समान छ , उनीहरु सबैको एक जाति हुन्छ ।

हरेक जाति विशेषका प्राणीहरुको शारीरिक अंगहरुमा समानता पाइन्छ । सृष्टिको नियम नै छ कि कोही पनि एक जाति अर्को जातिमा परिवर्तित हुन सक्दैन तथा भिन्न भिन्न जातिहरु एक-आपसमा सन्तान उत्पन्न गर्नसक्छन् । त्यसैले सबै जातिहरु ईश्वर निर्मित हुन् न कि मानव निर्मित । सबै मानवहरुको उत्पत्ति , शारीरिक रचना , सन्तान उत्पत्ति आदि एक समान हुने भएकाले उनीहरुको एक जाति हो र त्यो हो मानव जाति ।

ब्राह्मण , क्षत्रिय , वैश्य र शुद्रको लागि प्रयुक्त गरिएको वर्ण शब्दको अर्थ हुन्छ - जसको वरण गरिन्छ, अर्थात छानिन्छ । वर्णलाई छान्ने आधार गुण , कर्म  र स्वभाव हुन् । वर्णाश्रम व्यवस्था पूर्ण रुपमा वैदिक व्यवस्था हो र यसको मुख्य प्रयोजन समाजमा प्रत्येक मानवलाई परस्पर सहयोगी बनाएर भिन्न भिन्न कामहरुलाई परस्परमा बाँड्नु , कुनै पनि कार्यलाई त्यसका अनुरुप दक्ष व्यक्तिद्वारा गराउनु , सबै मनुष्यहरुलाई उनीहरुको योग्यता अनुरुप काममा लगाउनु एवं आजीविकाको प्रबन्ध गर्नु पनि हो ।

आरम्भमा सबै मनुष्यहरुको एकै वर्ण थियो । लौकिक व्यवहारहरुको सिद्धिको लागि कामहरुलाई परस्परमा बाँडियो । यो विभाग गर्ने प्रक्रिया पूर्ण रुपमा योग्यतामा आधारित थियो । कालान्तरमा वर्णको स्थानमा जाति शब्दको प्रयोग बढ्यो । मनुष्यहरुले आ-आफ्नो वर्णको अर्थात योग्यताको स्थानमा आ-आफ्ना जातिहरु निर्धारित पनि गरिहाले । गुण , कर्म र स्वभावको स्थानमा जन्मको आधारमा अलग अलग जातिहरुमा मनुष्य न केवल विभाजित भयो बरु एक अर्का प्रति भेदभावको व्यवहार पनि सुरु गर्यो । अन्तत: वैदिक वर्णाश्रम व्यवस्थाको स्थान छद्म  एवं मिथ्या जातिवादले लियो ।

शंका ३ : मनुष्यलाई ब्राह्मण , क्षत्रिय , वैश्य एवं शुद्रमा विभाजित गरेर के प्रयोजन सिद्ध भयो ?

समाधान : प्रत्येक मनुष्य अर्को मनुष्यप्रति जीवन निर्वाहको लागि निर्भर छ । कोही पनि व्यक्ति परस्पर सहयोग एवं सहायता बिना न त मनुष्योचित जीवन व्यतित गर्न सक्छ न त जीवनमा सफलता नै हासिल गर्न सक्छ । अत: यसका लागि आवश्यक कि व्यक्ति जीवनयापनका लागि सबै महत्वपूर्ण कार्यहरुको विभाजन गरोस् एवं त्यो कार्य गर्नका लागि जे-जस्तो शिक्षाको आवश्यकता छ त्यो शिक्षाको पनि ग्रहण गरोस् । सबैले जाने बुझेको कुरा हो कि अशिक्षित एवं अप्रशिक्षित व्यक्ति भन्दा शिक्षित एवं प्रशिक्षित व्यक्ति त्यस कार्यलाई राम्ररी गर्न सक्छ । समाज निर्माणको मूल सिद्धान्त पनि यही हो कि कोही पनि व्यक्ति बेकार नरहोस् र आजीविकाको साधन सबैलाई प्राप्त होस् । विद्वान् व्यक्तिहरु पनि राम्ररी जान्दछन् कि शरीरको कुनै एक अंगलाई प्रयोगमा नल्याउनाले बाँकी अंगहरुलाई पनि राम्ररी कार्य गर्नमा व्यवधान पुग्छ । त्यसैप्रकारले समाजको कुनै पनि व्यक्ति बेकार बसेपछि सम्पूर्ण समाजको हानी हुन्छ । सबैले जानेका र बुझेका छने कि कसरी भिखारी , चोर , ठग र डाँकुहरु समाजमा नै बोझ बनेका हुन्छन् । त्यसैले वेदमा समाजलाई व्यवस्थित गर्ने आदेश दिइएको छ कि ज्ञान प्रचारको लागि ब्राह्मण , राज्यको रक्षाको लागि क्षत्रिय , व्यापार-वाणिज्यको लागि वैश्य र सेवाकार्यको लागि शूद्रको उत्पत्ति हुनुपर्छ ।

- यजुर्वेद ३०.५

यसबाट यही सिद्ध हुन्छ कि वर्णव्यवस्थाको मूल उद्देश्य समाजमा गुण , कम र स्वभाव अनुसारको विभाजन हो ।

शंका ३ : आर्य र दस्यु/दासमा के भेद छ ?

समाधान : वेदहरुमा आचार भेदका आधारमा दुई विभाग गरिएका छन् - आर्य र दस्यु । ब्राह्मण आदि वर्णहरु कर्मका आधारमा निर्धारित छन् । स्वामी दयानन्दका अनुसार ब्राह्मणदेखि लिएर शुद्रसम्म चार वर्ण हुन् र चारै आर्य हुन् । मनुस्मृति १०.६३ का अनुसार चारै वर्णहरुको धर्म एकै हो - त्यो हो हिंसा नगर्नु , सत्य बोल्नु , चोरी नगर्नु , पवित्र रहनु एवं इन्द्रिय निग्रह नगर्नु ।

आर्य शब्द कुनै जातिवाचक शब्द होइन परन्तु गुणवाचक शब्द हो । आर्य शब्दको अर्थ हो - श्रेष्ठ अथवा बलवान् ,ईश्वरको पुत्र , ईश्वरको ऐश्वर्यको स्वामी , उत्तम गुणयुक्त , सद् गुण परिपूर्ण आदि । आर्य शब्दको प्रयोग वेदमा निम्नलिखित विशेषणका लागि भएको छ -

श्रेष्ठ व्यक्तिका लागि = ( ऋग्वेद . १.१०३.३ , ऋग्वेद. १.१३०.८ , ऋग्वेद १०.४९.३ )

इन्द्रको विशेषण  = ( ऋग्वेद .५.३४.६ ,ऋग्वेद. १०.१३८.३ )

सोमको विशेषण = ( ऋग्वेद .१०.६३.५ )

ज्योतिको विशेषण = ( ऋग्वेद .१०.४३.४ ), व्रतको विशेषण = ( ऋग्वेद .१०.६५.११) , प्रजाको विशेषण =( ऋग्वेद .७.३३.७ )

वर्णको विशेषण = ( ऋग्वेद .३.३४.९ )

दास शब्दको अर्थ अनार्य , अज्ञानी , अकर्मा , मानवीय व्यवहार शून्य , भृत्य , बलरहित शत्रुका लागि भएको छ , न कि कुनै जाति विशेषका लागि । जस्तै दासको अर्थ मेघ = ( ऋग्वेद .५.३०.७ , ६.२६.५ , ७.१९.२) , अनार्य = ( ऋग्वेद .१०.२२.८ ), अज्ञानी, अकर्मा , मानवीय व्यवहार शुन्य = ( ऋग्वेद .१०.२२.८ ), बलरहित शत्रु = ( ऋग्वेद . १०.८३.१ ) का लागि भएको छ ।

दस्यु शब्दको अर्थ उत्तम कर्महीन व्यक्ति = ( ऋग्वेद .७.५.६ ) अज्ञानी , अव्रती =( ऋग्वेद .१०.२२.८ ) , मेघ =( ऋग्वेद .१.५९.६ ) आदिको लागि भएको छ , न कि कुनै विशेष जाति अथवा स्थानका लागि ।

यी प्रमाणहरुबाट सिद्ध हुन्छ कि आर्य र दस्यु शब्द गुणवाचक हुन् जाति वाचक होइनन् । यी मन्त्रहरुमा आर्य र दस्यु , दास शब्दहरुको विशेषणहरुबाट जान्न सकिन्छ कि आफ्नो गुण , कर्म र स्वभावका कारणले नै मनुष्य आर्य र दस्युको नामले बोलाइन्छ । अतः उत्तम स्वभाववाला , शान्तिप्रिय , परोपकारी गुणहरुलाई अपनाउनेवाला आर्य तथा अनाचारी र अपराधी प्रवृत्तिवाला दस्यु हो ।

शंका ४ : वेदहरुमा शुद्रको अधिकारका बारेमा के भनिएको छ ?

समाधान : स्वामी दयानन्दले वेदहरुको अनुशीलनबाट पाउनु भयो वेदले सबै मनुष्य र सबै वर्णका मानिसका लागि वेद पढ्ने अधिकारको समर्थन गर्दछन् । स्वामीजीको कालमा शुद्रहरुलाई वेद पढ्न निषेध थियो । तर यसको विपरीत स्पष्ट रुपमा पाइयो कि शुद्रहरुको वेद अध्ययनको अधिकार स्वयं वेदहरुले नै दिएका छन् । वेदहरुमा शुद्र शब्द लगभग बिस पल्ट आएको छ । तर कतै पनि यो अपमानजनक रुपमा प्रयोग भएको छैन तथा वेदहरुमा कुनै पनि स्थानमा शूद्र जन्मले अछूत हुने , उनीहरुलाई वेद अध्ययनबाट वञ्चित गर्ने , अन्य वर्णहरु भन्दा तल्लो दर्जामा राख्ने या उनीहरुलाई यज्ञबाट टाढा राख्ने जस्ता कुरा उल्लेख छैन ।

हे मनुष्यहरु ! जसरी म परमात्मा सबैको कल्याण गर्नेवाला ऋग्वेद आदि रुप वाणीको सबै जनहरुको उपदेश गर्दै छु , जसरी म यस वाणीको ब्राह्मण र क्षत्रियको लागि उपदेश गर्दै छु , शुद्रहरु र वैश्यहरुका लागि जसरी म यस वाणीको उपदेश गर्दै छु र जसलाई तिमी आफ्नो आत्मीय मान्छौ , ती सबैको लागि म यसको उपदेश गर्दै छु र जसलाई ‘ अरण ’ अर्थात् पराई सम्भन्छौ , उसका लागि म यसको उपदेश गर्दै छु । त्यस्तै गरेर तिमी पनि सबै जनहरुमा यस वाणीको उपदेशको क्रमलाई चलाइ राख ।

- यजुर्वेद २६.२

प्रार्थना छ कि हे परमात्मा ! तपाई मलाई ब्राह्मणहरुको , क्षत्रियहरुको , शुद्रहरुको र वैश्यहरुको प्रिय बनाइदिनुहोस् । - अथर्ववेद १९.६२.१

यस मन्त्रको भावार्थ यो हो कि हे परमात्मा , मेरो स्वभाव र आचरण यस्तो बनोस् जसका कारण ब्राह्मण , क्षत्रिय , शूद्र र वैश्य सबै मलाई प्रेम गरून् ।

हे परमात्मन् ! तपाई हाम्रो रूचि ब्राह्मणहरुका प्रति उत्पन्न गर्नुहोस् , क्षत्रियहरुका प्रति उत्पन्न गर्नुहोस् , वैश्यहरुका प्रति उत्पन्न गर्नुहोस् र शूद्रहरुका प्रति उत्पन्न गर्नुहोस् । - यजुर्वेद १८.४६

यस मन्त्रको भाव यो हो कि हे परमात्मन् ! तपाईको कृपाले हाम्रो स्वभाव र मन यस्तो होओस् कि ब्राह्मण , क्षत्रिय , वैश्य र शूद्र सबै वर्णका जनहरुप्रति हाम्रो रुचि होओस् । सबै वर्णका जनहरु हामीलाई राम्रा लागून् , सबै वर्णका जनहरुप्रति हाम्रो व्यवहार सदा प्रेमको र प्रीतिपूर्ण रहोस् ।

हे शत्रु विदारक परमेश्वर ! मलाई ब्राह्मण र क्षत्रियको लागि , वैश्यको लागि , शूद्रको लागिर जसको लागि हामी इच्छा राख्छौ र प्रत्येक विविध प्रकारले हेर्नेवाला पुरुषहरुको लागि प्रिय बनाउनुहोस् ।

- अथर्ववेद १९.३२.८

यस प्रकार वेदको शिक्षामा शूद्रहरुका प्रति सदा नै प्रेम-प्रीतिको व्यवहार गर्ने र उनीहरुलाई आफ्नो नै अङ्ग ठान्ने कुरा गरिएको छ ।

शंका ५ : वेदहरुका शत्रुहरु मूलरुपमा पुरुषसूक्तलाई जातिवादको उत्पत्तिको मूल मान्दछन् ?

समाधान : पुरुषसूक्त १६ मन्त्रहरुको सूक्त हो , जो चारै वेदमा साधारण अन्तरका साथ भेटिन्छ । पुरुष सूक्तमा जातिवादको होइन , अपितु वर्ण व्यवस्थाका आधारभूत मन्त्रहरु छन् जसमा ' ब्राह्मणोऽस्य मुखमासीत् ' ब्राह्मण , क्षत्रिय , वैश्य र शूद्रलाई शरीरको मुख , भुजा, मध्यभाग र खुट्टाको उपमा दिइएको छ । यस उपमाबाट पनि यो सिद्ध हुन्छ कि जसरी शरीरका चारै अंग मिलेर शरीरको निर्माण हुन्छ त्यसरी नै ब्राह्मणादि चारै वर्णहरु मिलेर यौटा समाजको निर्माण हुन्छ । जसरी शरीरका चारै अंग एक-अर्काको सुख-दुःखमा आफ्नो सुख-दुःखको अनुभव गर्दछन् , त्यसैप्रकारले समाजमा ब्राह्मण आदि चारै वर्णले एक-अर्काको सुख-दुःखमा आफ्नो सुख-दुःखको अनुभव गर्नुपर्छ । यदि खुट्टामा काँडा गड्यो भने मुखबाट दुखाइको ध्वनी निस्कन्छ र हात सहायता हेतु पुगिहाल्छन् । त्यसै प्रकारले समाजमा जब शूद्रलाई कुनै कठिनाई पुग्छ तब ब्राह्मण पनि र क्षत्रिय पनि उसको सहायताको लागि अगाडि आऊन् । सबै वर्णमा परस्पर पूर्ण सहानुभूति , सहयोग र प्रेम-प्रीतिको व्यवहार हुनुपर्छ । यस सूक्तमा कतै पनि शूद्रका प्रति भेदभावको कुरा गरिएको छैन । केही अज्ञानीहरुले पुरुषसूक्तको मनमानी अर्थ यो निकालेका छन् कि ब्राह्मण शीर हो त्यसैले सबै वर्णहरुमा उच्च छ , अर्थात् सबै वर्णहरुमा श्रेष्ठ छ , एवं शूद्र जो खुट्टा हो त्यसैले सबैभन्दा नीच हो । यो अर्थ गलत हो । पुरुषसूक्तमा कर्मका आधारमा समाजको विभाजन छ न कि जन्मको आधारमा ।

यस सूक्तको अर्को अर्थ केही यस प्रकारको पनि छ कि जब कुनै व्यक्ति समाजमा ज्ञानको सन्देश प्रचार प्रसारहेतु योगदान दिन्छ भने ऊ ब्राह्मण अर्थात् समाजको शीर हो । जो व्यक्ति समाजको नेतृत्व गर्छ ऊ क्षत्रिय अर्थात् समाजको भुजा हो । यदि कोही व्यक्ति समाजलाई व्यापार , धन आदिले समृद्ध गर्छ भने ऊ वैश्य अर्थात् समाजको जाँघ हो । यदि कोही विद्या रहित छ , अर्थात शुद्र छ भने ऊ ती तिन वर्णलाई आ-आफ्नो कार्य गर्नमा सहायता गरोस् अर्थात् यी तिनको नींव बनोस् , बलियो आधार बनोस् ।

शंका ६ : के वेदहरुमा शूद्रलाई नीच मानिएको छ ?

समाधान : वेदहरुमा शूद्रलाई अत्यन्त परिश्रमी मानिएको छ । यनुर्वेदमा आएको छ कि ‘ तपसा शूद्रम्र ’ अर्थात् मिहिनेतले अन्न उत्पन्न गर्नेवाला तथा शिल्प आदि कठिन कार्यको अनुष्ठान गर्नेवाला शुद्र हो । तप शब्दको प्रयोग अनन्त सामर्थ्यद्वारा जगत्का सबै पदार्थहरुको रचना गर्नेवाला ईश्वरको लागि वेदमन्त्रहरुमा गरिएको छ ।

वेदहरुमा वर्णात्मक दृष्टिले शूद्र र ब्राह्मणमा कुनै भेद छैन । यजुर्वेद ३०.२२ मा आएको छ कि मनुष्यहरुमा निन्दित व्यभिचारी , जुवाडे , नपुंसक जसमा शुद्र ( श्रमजीवीहरु ) र ब्राह्मण ( अध्यापक एवं शिक्षक ) पर्दैनन् , उनीहरुलाई टाढा बसाऊ र जो राजाका हितकारी ( सदाचारी ) छन् उनीहरुलाई समीप बसाइयोस् । यस मन्त्रमा व्यवहार सिद्धिको दृष्टिकोणले ब्राह्मण र शुद्रमा कुनै भेद छैन । दुवैलाई समीप बसाउनुको अर्थले यही दर्शाउँछ कि शुद्र अछुत शब्दको पर्यायवाची होइन एवं न त नीच हुनुको बोधक हो । ऋग्वेद ५.६०.५ मा आएको छ कि मनुष्यहरुमा न त कोही ठुलो छ न त कोही सानो छ । सबै आपसमा समान भाइ हुन् । सबै मिलेर लौकिक एवं पारलौकिक सुखको प्राप्ति गरून् ।

मनुस्मृति १०.६३ मा लेखिएको छ कि हिंसा नगर्नु , सत्य बोल्नु , अरुको धन अन्यायका साथ हरण नगर्नु , पवित्र रहनु , इन्द्रियहरुको निग्रह गर्नु चारै वर्णको समान धर्म हो । यहाँ स्पष्ट रुपमा चारै वर्णको आचार धर्मलाई एक मानिएको छ । वर्णभेदले धार्मिक हुने कुनै भेद यहाँ छैन ।

ब्राह्मणीको गर्भबाट उत्पन्न हुँदैमा , संस्कारले , वेदश्रवणले अथवा ब्राह्मण पिताको सन्तान हुँदैमा कोही ब्राह्मण हुँदैन ,अपितु सदाचारले नै मनुष्य ब्राह्मण बन्दछ । कोही पनि मनुष्य कुल र जातिका कारण ब्राह्मण हुन सक्दैन । यदि चाण्डाल पनि सदाचारी छ भने ऊ ब्राह्मण हुन सक्छ ।

-महाभारत अनुशासन पर्व अध्याय -२२६

जो ब्राह्मण दुष्ट कर्म गर्दछ , ऊ दम्भी, पापी र अज्ञानी हो - उसलाई शुद्र सम्झनुपर्छ । तथा जो शुद्र सत्य र धर्ममा स्थित छ , उसलाई ब्राह्मण सम्झनुपर्छ । - महाभारत वनपर्व अध्याय - २१६.१४

शुद्र यदि ज्ञान सम्पन्न छ भने ऊ ब्राह्मणभन्दा पनि श्रेष्ठ र आचार भ्रष्ट ब्राह्मण शुद्रभन्दा पनि नीच हुन्छ । - भविष्य पुराण ४४.३३

शुद्रहरुको पठन-पाठनको विषयमा लेखिएकृ छ कि दुष्ट कर्म नगर्नेवालाको उपनयन अर्थात् ( विद्या ग्रहण) ग्रहण गराउनु पर्छ । - गृहसूत्र काण्ड २ हरिहर भाष्य

कूर्म पुराण अध्याय १९ मा शुद्रहरु वेदहरुका विद्वान् बनेको वर्णन पाइन्छ ।

शंका ७ : स्वामी दयानन्दको वर्ण व्यवस्था एवं शुद्र शब्दमा के दृष्टिकोण छ ?

समाधान : स्वामी दयानन्दका अनुसार ‘ जो मनुष्य विद्या पढ्ने सामर्थ्य त राख्दैनन् तर पनि धर्माचरण गर्न चाहन्छन् भने विद्वान्हरुको संग र आफ्नो आत्माको पवित्रताद्वारा धर्मात्मा अवश्य हुन सक्छन् । सबै मनुष्यहरु विद्वान् हुन सम्भव त छैन तर धार्मिक हुने सम्भाव्यता भने सबैमा रहन्छ । ’

-व्यवहारभानु स्वामी दयानन्द सरस्वती

स्वामीजी आर्यहरुका चार वर्ण मान्नुहुन्छ , अतः शुद्र पनि आर्य नै हुन् ।

स्वामी दयानन्दका अनुसार गुण , कर्म र व्यवस्थाका अनुसार मनुष्यको कर्म व्यवस्था हुनु पर्छ । यस सन्दर्भमा सत्यार्थ प्रकाशको चतुर्थ समुल्लासमा स्वामीजी प्रश्नोत्तर शैलीमा लेख्नुहुन्छ -

प्रश्न - जसका मातापिता अन्य वर्णस्थ हुन्छन् , उनीहरुका सन्तान के ब्राह्मण हुन सक्छन् ?

उत्तर : धेरै भइसकेका छन् , हुन्छन् र हुनेछन् । जस्तै छान्दोग्योपिनषत् ४.४ मा जाबाल ऋषि अज्ञात कुलबाट , महाभारतमा विश्वामित्र क्षत्रिय वर्णबाट र मातंग चाण्डाल कुलबाट ब्राह्मण भइसकेका थिए । अहिले पनि जो उत्तम विद्या , स्वभावशील छ , उही ब्राह्मण हुन योग्य छ र मूर्ख शुद्र हुन योग्य छ । स्वामी दयानन्द मनु २.२८ का अनुसार भन्नुहुन्छ कि ब्राह्मणको शरीर रज र वीर्यले हुँदैन परन्तु स्वाध्यार , जप नाना विधि होमको अनुष्ठान , सम्पूर्ण वेदहरुको पठन-पाठन , इष्टि आदि यज्ञहरु गरेर , धर्मले सन्तान उत्पत्ति , मंत्र , महायज्ञ , अग्निहोत्र आदि यज्ञ , विद्वानहरुको संग , सत्कार , सत्य भाषण , परोपकार आदि सत्कर्म , दुराचार छोडेर श्रेष्ठ आचरणयुक्त व्यवहारले ब्राह्मणको शरीर हुन्छ । रज वीर्यले वर्णाश्रम व्यवस्वथा मान्नेहरुले सोचून् कि जसको पिता श्रेष्ठ उसको पुत्र दुष्ट र जसको पुत्र श्रेष्ठ उसको पिता दुष्ट र कतै कतै त दुबै श्रेष्ठ तथा दुबै दुष्ट देख्न सकिन्छ ।

ज-जसले गुण, कर्म र स्वभावद्धारा वर्णाश्रम व्यवस्था नमानेर रज वीर्यले वर्ण व्यवस्था मान्दछन् , उनीहरुसँग सोध्नुपर्छ कि जो आफ्नो वर्णलाई नीच , अन्त्यज अथवा विधर्मी हुन गयो भने उसलाई पनि ब्राह्मण किन न मान्ने ? यसमा यही भन्नु पर्छ कि ‘ ब्राह्मणको कर्म छोडेकाले ऊ ब्राह्मण होइन ’ यसबाट पनि यही सिद्ध हुन्छ कि जो ब्राह्मण आदि उत्तम कर्म गर्दछन् उनै ब्राह्मण र जो नीच पनि उत्तम वर्णका गुण , कर्म र स्वभाववाला हुन्छन् , उनीहरुलाई पनि उत्तम वर्णमा तथा जो उत्तम वर्णस्थ भएर नीच काम गर्दछन् उनीहरुलाई नीच वर्णमा गन्नु पर्छ । सत्यार्थ प्रकाश अष्टम समुल्लासमा स्वामी दयानन्द लेख्नुहुन्छ कि - श्रेष्ठहरुको नाम आर्य , विद्वान् , देव र दुष्टहरुको दस्यु अर्थात् डाँकु , मूर्ख हुनाले आर्य र दस्यु दुई नाम भएका हुन् । आर्यहरुमा ब्राह्मण , क्षत्रिय , वैश्य र शुद्र यी चार भेद भए । मनुस्मृतिका अनुसार जो शुद्र कुलमा उत्पन्न भएर ब्राह्मण , क्षत्रिय या वैश्य गुण , कर्म र स्वभाववाला हुन्छ त्यो शुद्र ब्राह्मण , क्षत्रिय या वैश्य हुन्छ । त्यस्तै प्रकारले जो ब्राह्मण क्षत्रिय र वैश्य कुलमा उत्पन्न भएर पनि गुण , कर्म र स्वभाव शुद्रको समान हुन्छ , ऊ शुद्र हुन जान्छ । त्यस्तै नै क्षत्रिय या वैश्य कुलमा जन्मेर पनि ब्राह्मण या शुद्रको समान भएपछि ब्राह्मण या शुद्र पनि भइहाल्छन् । अर्थात् चारै वर्णमा जुन जुन वर्ण सदृश जो जो स्त्री व पुरुष हुन्छन् उनीहरु त्यस-त्यस वर्णमा गनिन्छन् ।

- सत्यार्थ प्रकाश चतुर्थ समुल्लास

आपस्तम्ब सूत्र २.५.१.१ को प्रमाण दिँदै स्वामी दयानन्द भन्नुहुन्छ कि - धर्माचरणले निकृष्ट वर्ण पनि आफूभन्दा उत्तम वर्णका हुनसक्छन् तथा उनीहरु त्यही वर्णमा गनिनेछन् ज-जसको उनीहरु योग्य छन् । त्यसैप्रकारले अधर्माचरणले उत्तम वर्णको मनुष्य पनि आफूभन्दा नीच वर्णलाई प्राप्त हुनेछ तथा त्यही वर्णमा गनिनेछ ।

स्वामी दयानन्द जातिवादका प्रबल विरोधी तथा वर्णाश्रम-व्यवस्थाका प्रबल समर्थक थिए । वेदहरुमा शुद्रहरुको पठन-पाठनको अधिकार एवं सँगसँगै बसेर खान-पान आदि गर्नको लागि उहाँले विशेष प्रयास गर्नुभएको थियो ।

शंका ८ : के वेदादि शास्त्रहरुमा शुद्रहरुलाई अछुत भनिएको छ ?

समाधान : वेदहरुमा शुद्रहरुलाई आर्य बताइएको छ , त्यसैले उनीहरुलाई अछुत सम्झिने कुनै प्रश्न नै उठ्दैन । वेदादि शास्त्रहरुको प्रमाणले पनि सिद्ध हुन्छ कि ब्राह्मण वर्णदेखि शुद्र वर्ण आपसमा एक साथ अन्न ग्रहण गर्नका हिचकिचाउँदैन थिए ।

वेदहरुमा स्पष्ट रुपमा एकसाथ भोजन गर्ने आदेश दिइएको छ ।

हे मित्रहरु तिमी र हामी मिलेर बलवर्द्धक र सुगंधयुक्त अन्न खाऔं अर्थात् सहभोज गरौं । -ऋग्वेद ९.९८.२

हे मनुष्यहरु , तिमीहरुको पानी पिउने स्थान र तिमीहरुको अन्न सेवन अथवा खानपानको स्थान एकैसाथ होस् । - अथर्ववेद ६.३०.६

महाराज दशरथको यज्ञमा शुद्रहरुले पकाएको भोजन ब्राह्मण , तपस्वी र शुद्रहरु मिलेर ग्रहण गर्दथे ।

- वाल्मीकि रामायण

श्री रामचन्द्रजीद्वारा भीलनी शबरीको आश्रममा गएर उनको पाउँको स्पर्श गर्नु एवं उनको आतिथ्य स्वीकार गर्नु , निषाद्राजसँग भेट हुँदा आलिंगन गर्नु । - वाल्मीकि रामायण

यी प्रमाण यस तथ्यका उद्बोधक हुन् कि रामायण कालमा भील , निषाद् शुद्र आदिलाई अछुत मानिन्नथ्यो ।

राजा धृतराष्ट्रको दरबारमा पूर्वोक्तझैं अरालिक र सूपकार आदि शुद्र भोजन बनाउनको लागि नियुक्त थिए । - महाभारत अनुशासन पर्व १.१९

यी प्रमाणहरुबाट स्पष्ट हुन्छ कि वैदिक कालमा शुद्रहरु पनि अछुत थिएनन् । कालान्तरमा केही अज्ञानीहरुले छुवाछुतको गलत प्रथाको आरम्भ गरिदिए जसबाट विकृत मानसिकतालाई प्रोत्साहन मिल्यो ।

शंका ९ : यदि ब्राह्मणको पुत्र गुण , कर्म र स्वभाव रहित भए के ऊ शुद्र कहलिन्छ र यदि शुद्र गुण , कर्म र स्वभावले गुणवान् भए के ऊ ब्राह्मण कहलिन्छ ?

समाधान : वैदिक वर्णाश्रम व्यवस्थाका अनुसार ब्राह्मणको पुत्र विद्या प्राप्तिमा असफल भयो भने शुद्र कहलिन्छ । त्यसैगरी शुद्रको पुत्र पनि विद्या प्राप्तिको उपरान्त आफ्नो ब्राह्मण , क्षत्रिय या वैश्य वर्ण प्राप्त गर्न सक्छ । यो सम्पूर्ण व्यवस्था विशुद्ध रुपमा गुणवत्तामा आधारित छ । जसरी शिक्षा पूर्ण गरिसकेपछि आजभोलि उपाधिहरु दिइन्छन् , त्यसै प्रकारले वैदिक व्यवस्थामा यज्ञोपवीत दिइन्थ्यो । प्रत्येक वर्णका लागि निर्धारित कर्तव्य तथा कर्मको पालन नहुँदा यज्ञोपवीत फिर्ता लिने प्रावधान थियो ।

वैदिक इतिहासमा वर्ण परिवर्तनका अनेक प्रमाण उपस्थित छन् , जस्तै -

१. ऐतरेय ऋषि दास अथवा अपराधीका पुत्र थिए , परन्तु आफ्नो गुणहरुले गर्दा उच्च कोटिका ब्राह्मण बनेर ऐतरेय उपनिषत्को रचना पनि गरे । ऋग्वेदलाई बुझ्नको लागि ऐतरेय ब्राह्मण सर्वाधिक महत्वको छ ।

२. ऐलूष ऋषि दासी पुत्र थिए , जुवाडे तर चरित्रहीन पनि थिए परन्तु पछि उनको अध्ययन र ऋग्वेदको अनुसन्धानले उनलाई एक अविष्कारकका रुपमा चिनायो । ऋषिहरुले उनीलाई आमन्त्रित गरेर उनलाई आचार्य पदमा आसीन गराए । - ऐतरेय ब्राह्मण २.१९

३. सत्यकाम जाबाल गणिका अर्थात वेश्याका पुत्र थिए परन्तु उनी ब्राह्मणत्वलाई प्राप्त गर्न सफल भए । - छान्दोग्योपनिषत् ४.४.४

४. राजा दक्षका पुत्र पृषध शुद्र हुन पुगे , प्रायश्चित स्वरुप तपस्या गरेर उनीले मोक्ष प्राप्त गरे ।

- विष्णु पुराण ४.१.१४

यदि उत्तर रामायणको मिथ्या प्रक्षिप्त कथाका अनुसार शुद्रहरुको लागि तपस्या गर्नु वर्जित भए पृषध कसरी यस कार्यका सफल हुन्थे ?

५. राजा नेदिष्टका पुत्र नाभाग वैश्य भए , पुनः इनका कैयौ पुत्रहरुले क्षत्रिय वर्ण अपनाए ।

- विष्णु पुराण ४.१.१३

६. धृष्ट नाभागका पुत्र थिए परन्तु ब्राह्मण भए र उनका पुत्रहरुले क्षत्रिय वर्ण अपनाए ।

- विष्णु पुराण ४.२.२

७. पछि उनकै वंशमा पुनः ब्राह्मणहरु भए ।

- विष्णुपुराण ४.२.२

८. भागवतका अनुसार राजपुत्र अग्निवैश्य ब्राह्मण भए ।

९. विष्णुपुराण र भागवतका अनुसार रथोतर क्षत्रियबाट ब्राह्मण बनेका थिए ।

१०. हारित क्षत्रिय पुत्रबाट ब्राह्मण बनेका थिए । - विष्णु पुराण ४.३.५

११. क्षत्रिय कुलमा जन्मेका शौनकले ब्राह्मणत्व प्राप्त गरे । वायु , विष्णु र हरिवंशपुराण भन्छन् कि शौनक ऋषिका पुत्र कर्म भेदले ब्राह्मण , क्षत्रिय , वैश्य र शुद्र वर्णका भए । यसै प्रकारले गृत्समद , गृत्समति र वीतहव्यका उदाहरण पनि छन् । - विष्णु पुराण ४.८.१

१२. मातंग चाण्डालपुत्रबाट ब्राह्मण बनेका थिए । - महाभारत राजधर्म अध्याय २७

१३. ऋषि पुलस्त्यका नाति रावण आफ्ना कर्मका कारण राक्षस बनेको थियो ।

१४. राजा रघुका पुत्र प्रवृद्ध राक्षस बनेको थियो ।

१५. त्रिशंकु राजा हुँदा-हुँदै पनि कर्मले गर्दा चण्डाल बनेका थिए ।

१६. विश्वामित्रका पुत्रहरुले शुद्र वर्ण अपनाएका थिए । विश्वामित्र स्वयं क्षत्रिय थिए परन्तु पछि उनले ब्राह्मणत्व प्राप्त गरेका थिए ।

१७ . विदुर दासी पुत्र थिए तथापि ब्राह्मण भए र उनी हस्तीनापुरमा मन्त्रीमा सुशोभित गराइएका थिए ।

यी उदाहरणहरुबाट पनि यही सिद्ध हुन्छ कि वैदिक वण व्यवस्थामा वर्ण परिवर्तनको प्रावधान थियो एवं जन्मले कसैको पनि वर्ण निर्धारित हुँदैनथ्यो ।

मनुस्मृति १०.६५ मा पनि वर्ण परिवर्तनका स्पष्ट आदेश छ ।

शुद्र ब्राह्मण र ब्राह्मण शुद्र हुन सक्छ । यसैप्रकारले क्षत्रियहरु र वैश्यहरुका सन्तानहरुको वर्ण पनि परिवर्तन हुन्छ । अथवा चारै वर्णका व्यक्तिहरु आ-आफ्नो कार्यलाई बदलेर आ-आफ्नो वर्णलाई परिवर्तन गर्नसक्छन् ।

शुद्र पनि यदि जितेन्द्रिय भएर पवित्र कर्महरुको अनुष्ठानले अन्तः करणलाई शुद्ध बनाउँछ भने ऊ द्विज ब्राह्मणहरुझैं सेव्य हुन्छ । यो साक्षात् ब्रह्माजीको कथन हो । - महाभारत दानधर्म अध्याय १४३.४७

देवी ! यिनै शुद्ध कर्म र आचरणहरुले शुद्र ब्राह्मणत्वलाई प्राप्त हुन्छ  वैश्य क्षत्रियत्वलाई ।

- महाभारत दानधर्म अध्याय १४३.२६

जन्मना जायते शूद्रः संस्काराद् द्विज उच्यते ।

वेद पाठी भवेद् विप्रः ब्रह्मा जानेति ब्राह्मणः ॥

अर्थात् जन्मले सबै शुद्र हुन्छन् , संस्कारहरुले द्विज हुन्छन् । वेद पढेर विप्र भइन्छ र ब्रह्म ज्ञानले ब्राह्मण भइन्छ ।                                        - नरसिंह तापनि उपनिषद्

शुभ संस्कार तथा वेदाध्ययन युक्त शुद्र पनि ब्राह्मण हुन्छ र दुराचारी ब्राह्मण ब्राह्मणत्वलाई त्यागेर शुद्र बन्दछ ।                                        - ब्रह्म पुराण २२३.४३

जसमा सत्य , दान , द्रोहको अभाव , क्रुरताको अभाव , लज्जा , दया र तप यी सबै सद्गुण देख्न सकिन्छ ऊ ब्राह्मण हो ।

-महाभारत शान्ति पर्व अध्याय ८८.४

ब्राह्मणीको गर्भबाट जन्म लिनु , संस्कार , वेद श्रवण , ब्राह्मण पिताको सन्तान हुनु , यी ब्राह्मणत्वका कारण होइनन् बरु सदाचारद्वारा नै ब्राह्मण भइन्छ । - महाभारत अनुशासन पर्व अध्याय १४३.५१

कोही पनि मनुष्य कुल , जाति वा क्रियाका कारणले ब्राह्मण हुन्न । यदि चाण्डाल पनि सदाचारी छ भने ऊ ब्राह्मण हुनसक्छ । -महाभारत अनुशासन पर्व अध्याय २२६.१५

शंका १० : के वेदका अनुसार शिल्प विद्या र त्यसलाई गर्नेहरुलाई नीच मानिएको छ ?

समाधान : वैदिक कालमा शिल्प विद्यालाई सबै जातिका मान्छेले आ-आफ्नो आवश्यकताका अनुसार गर्दथे । कालान्तरमा शिल्प विद्या केवल शुद्र वर्णमा मात्र सीमित हुन पुग्यो र अज्ञानताको कारण जसरी शुद्रहरुलाई तल्लो मानिन्थ्यो त्यसरी नै शिल्प विद्यालाई पनि तल्लो मान्न थालियो । यजुर्वेदमा वेदहरुका विद्वान्देखि शुद्रहरुलाई पनि शिल्प आदि कार्य गर्ने प्रेरणा दिइएको छ । जसरी विद्वान्हरु अनेक धातु एवं साधन विशेषहरुबाट वस्त्रादिलाई बनाएर आफ्ना कुटुम्बको पालन गर्दछन् पदार्थहरुको मेलरूप यज्ञ गरेर पथ्य औषधीरूप पदार्थहरुलाई दिएर रोगहरुबाट मुक्ति दिएर शिल्प क्रियाको प्रयोजनलाई सिद्ध गर्दछन् , त्यसरी नै अन्यले पनि गर्दै गरून् । - यजुर्वेद १९.८०

हे बुद्धिमानहरु , जो वाहनहरुलाई बनाउन र चलाउनमा चतुर तथा शिल्पी जनहरु हुन्छन् , उनीहरुको ग्रहण र सत्कार गरेर शिल्प विद्याको उन्नति गर । - ऋग्वेद ४.१३६.२

यस्तै आलङ्कारिक वर्णन ऋग्वेदको १.१२०.१-४ एवं १.११०.४ मा पनि पाइन्छ । जातिवादका पोषक अज्ञानी व्यक्तिहरुले यो जान्नुपर्ने हुन्छ कि समाजमा लौकिक व्यवहारहरुको सिद्धिको लागि एवं दरिद्रताको नाशको लागि शिल्प विद्या र त्यसको संरक्षण दिनेहरुको उचित सम्मान गर्नुपर्छ । यसैमा पुरै मानव जातिको भलो रहन्छ ।

शंका ११: जातिभेदको उत्पत्ति कसरी भयो र यसका के - के हानिहरु रहेका छन् ?

समाधान : जातिभेदको उत्पत्तिको मुख्य कारण केही अनार्य जातिहरुमा उन्नत जाति कहलिने इच्छा , केही समाज सुधारकहरुद्वारा पन्थहरुको स्थापना र जसको पछि कुनै विशेष जातिको रुपमा परिवर्तन - जस्तै लिंगायत र बिशनोई । व्यवसाय भेदका कारण - जसरी गोठालाहरुलाई पछि अहीर भन्न थालियो । स्थान भेदका कारण- जसरी कान्य कुब्ज ब्राह्मणहरु कन्नौजबाट निस्किए । रीति रिवानका कारण पौराणिक कालमा धर्माचार्यहरुको अज्ञानताका कारण रामायण , महाभारत , मनुस्मृति आदि ग्रन्थहरुमा मिलावट गरेर धर्मग्रन्थलाई जातिवादका समर्थकका रुपमा परिवर्तित गर्नु थियो ।

पूर्वकालमा जातिभेदका कारण समाजले भयानक हानि सहनु परेको थियो र यदि यसै किसिमले चल्दै गए अझै पनि यस प्रकारको हानि सहनुपर्ने छ । जातिभेदलाई मान्नेवाला व्यक्ति आफ्नो जातिभन्दा बाहिरको व्यक्तिको हितको बारेमा कहिल्यै पनि सोच्दैन र उसको मानसिकता सधैं अनुदार बनिरहन्छ । यस मानसिकताको प्रभावमा समान एकताबद्ध हुनुको साटो वैमनस्यता र आपसी कलहतिर तीव्र गतिले बढिरहन्छ ।

RC Dutt महोदयका अनुसार ' हिन्दु समाजमा जातिभेदका कारण धेरै हानिहरु भएका छन् , तर यसको अति नराम्रो एवं शोकजन्य प्रभाव यो रह्यो कि जहाँ एकता र समभाव हुनुपर्ने थियो , त्यहाँ विरोध र मतभेद उत्पन्न भयो । जहाँ प्रजामा बल र जीवन हुनुपर्ने थियो , त्यहाँ निर्बलता र मृत्युको वास रहन पुग्यो । ' - ( Civilizations in Ancient India )

सामाजिक एकता भंग भएर विपरीत परिस्थितिहरुमा जब शत्रुहरुले हामीलाई आक्रमण गर्दथे , तब साधन सम्पन्न हुँदा-हुँदै पनि शत्रुहरुले सहजै जित हासिल गर्दथे । जातिवादका कारण देशले कैयौं शताब्दी पर्यन्त दासता स्विकार्नु पर्यो । जातिवादका कारण करोडौं हिन्दू सदस्यहरु धर्मान्तरण गरेर विधर्मी बन्न पुगे । यो कसको हानि थियो ? केवल हिन्दुको र हिन्दु समाजको हानि थियो ।

आशा छ पाठक गणहरु वेदहरुलाई जातिवादको पोषक नमानेर शुद्रहरुका प्रति उचित सम्मान दिने तथा जातिवाद होइन परन्तु वर्णाश्रम व्यवस्थाका पोषक मान्नको लागि कुनै आपत्ति मान्नेछैनन्  एवं जातिवादका सम्भावित हानिहरुलाई बुझेर सर्वथा यसको त्याग गर्नेछन् ।

# ३ वेदहरुमा नारी

नारीहरुको विषयमा वेदहरुलाई लिएर धेरै भ्रान्तिहरु विद्यमान छन् । भारतीय समाजमा वेदहरुमाथि यो दोषारोपण गरिन्छ कि वेदहरुका कारण नारी जातिले सती प्रथा , बालविवाह , देवदासी प्रथा , अशिक्षा , समाजमा तल्लो स्थान , विधवाको अभिशाप , नवजात कन्याको हत्या आदि अत्याचारहरु सहनु परेको हो । कसैले यो प्रचलित गरिदियो कि नारीले यदि वेदमन्त्र सुने भने तिनीहरुको कानमा तातो सिसा हालिदिनु पर्छ तर यदि वेदमन्त्रको उच्चारण गरे भने उनीहरुको जिब्रो काटिदिनुपर्छ । कोही नारीलाई आफ्नो खुट्टाको जुत्ता भन्नमा आफ्नो इज्जत चुलिएको ठान्छ भने कोही ताडनको अधिकारीसम्म घोषित गरिदिन्छ । इतिहास साक्षी छ कि नारीहरुको अपमानजनक स्थिति पश्चिमदेखि पूर्वसम्म सबै देशहरुको इतिहासमा देख्न सकिन्छ । यस विषयमा सबैभन्दा महत्वपूर्ण तथ्य के हो भने वेदहरु यी अत्याचारहरुमध्ये कसैको समर्थन गर्दैनन् परन्तु वेदहरुमा नारीको यति उच्च स्थान छ जुन संसारका कुनै अरु धार्मिक पुस्तकमा त्यसको अंश पनि देख्न सकिन्न । यति हुँदाहुँदै पनि केही लेखकहरुले वेदहरुमा नारीको स्थितिलाई भने निकृष्ट ( तल्लो ) रुपमा दर्साएका छन् ।

शंका १ : वेदहरुमा नारीका कर्तव्यहरु एवं अधिकारका विषयमा के भनिएको छ ?

समाधान : वेदहरुमा नारीको स्थिति अत्यन्त गौरवास्पद वर्णित भएको छ । वेदहरुका नारीहरु देवी हुन् , विदुषी हुन् , प्रकाशले परिपूर्ण हुन् , वीरांगना हुन् , वीरहरुकी जननी हुन् , आदर्श माता हुन् , कर्तव्यपरायण पत्नी हुन् , सद्गृहणी हुन् , सम्राज्ञी हुन् , सन्तानकी प्रथम शिक्षिका हुन् , अध्यापक बनेर कन्याहरुलाई सदाचार र ज्ञान-विज्ञानको शिक्षा दिनेवाली हुन् , उपदेशिका बनेर सबैलाई सन्मार्ग बताउनेवाली हुन् , मर्यादाहरुको पालन गर्नेवाली हुन् तथा जगत्मा प्रेम र सद्भाव फैलाउनेवाली हुन् । यदि गुण कर्म अनुसार क्षत्रिया हुन् त धनुर्विद्यामा निपुण भएर राष्ट्र-रक्षामा भाग पनि लिन्छिन् । यदि वैश्यको गुण कर्म भए उच्चकोटिको पशुपालन , व्यापार आदिमा योगदान पनि दिन्छिन् र शिल्पविद्यामा पनि उन्नति गर्दछिन् । वेदहरुकी नारी पूज्य छिन् , स्तुति योग्य छिन् , रमणीय छिन् , आह्वान-योग्य छिन् , सुशील छिन् तथा बहुश्रुत यशोमयी पनि छिन् ।

पुरुष र नारीको सम्बन्धलाई लिएर वेदहरुमा आलङ्कारिक वर्णन रहेको छ । पुरुष द्युलोक हो त नारी पृथ्वी हो , दुवैको सामञ्जस्यद्वारा जगत् बनेको छ । पुरुष साम हो त नारी ऋक् , दुवैको सामञ्जस्यद्वारा सृष्टिको सामगान हुन्छ । पुरुष वीणा हो त नारी वीणाको तन्त्री , दुवैको सामञ्जस्यद्वारा जीवनको संगीतको झंकार निस्सृत हुन्छ । पुरुष नदीको एक तट हो त नारी अर्को तट , दुवैको बिचमा नै वैचारिक र सामाजिक विकासको धारा बग्दछ । पुरुष दिन हो त नारी रजनी हुन् । पुरुष प्रभात हो त नारी उषा हुन् । पुरुष मेघ हो त नारी विद्युत हुन् । पुरुष अग्नि हो त नारी ज्वाला हुन् । पुरुष आदित्य हो त नारी प्रभा हुन् । पुरुष तरु हो त नारी लता हुन् । पुरुष फूल हुन् त नारी पत्र हुन् । पुरुष कर्म हो त नारी विद्या हुन् । पुरुष सत्व हो त नारी सेवा हुन् । पुरुष स्वाभिमान हुन त नारी क्षमा हुन् । दुवैको सामञ्जस्यमा नै पूर्णता रहेको छ । विवाह यही सामञ्जस्यको एक प्रतीक हो ।

वेदहरुमा नारीका दुई जन्म मानिएका छन् । एक शरीरत: र अर्को विद्यात: । विद्यात: नारीको जन्म भएपछि विवाह-वेदीमा जसरी नारीको पदार्पण हुन्छ , त्यसैगरी उनले यौटा नयाँ कुल , व्रत ,यज्ञ आदिमा पदार्पण गर्छिन् । उनको नाम , काम , नाता -सम्बन्ध आदि सबै परिवर्तन हुन्छन् । उनका दुई कुल हुन जान्छन् । एक पितृ कुल र अर्को पति कुल । नारी दुवै कुलहरुलाई जोड्ने सूत्र हुन् । पितृ कुलमा नारी कन्या , पुत्री , भगिनी , नन्द , फुपू हुन् भने पति कुलमा नारी वधू , गृहणी , पत्नी , भार्या , जाया , दारा , आमा , सासू आदि हुन् । वेदहरुमा यी सबै दायित्वहरुका अनुरुप नारीका कर्तव्यहरुको विस्तारपूर्वक वर्णन रहेको छ । वैदिक मन्त्रहरुमा पनि नारीलाई उसका कर्तव्यहरुको पालन गर्ने प्रेरणा दिँदै महान् बन्ने प्रेरणा दिइएको छ ।

शंका २ : स्वामी दयानन्दको नारी जातिको उत्थानको विषयमा के विचार रहेको छ ?

समाधान : स्वामी दयानन्द न केवल नारी जातिलाई शिक्षित गर्ने पक्षमा हुनुहुन्थ्यो परन्तु नारी जातिलाई गृहस्वामिनीदेखि प्राचीनकालका महान् विदुषी गार्गी र मैत्रेयी समान बनाउन चाहनुहुन्थ्यो । स्वामी दयानन्दका अनुसार नारी ताडनको होइन सम्मानकी अधिकारी हुन् ।

सत्यार्थ प्रकाशमा स्वामी दयानन्द क्रान्तिकारी उद्घोष गर्दै लेख्नुहुन्छ कि ' जन्मदेखि पाँचौ वर्षसम्म बालकहरुलाई माता तथा छ वर्षदेखि आठौ वर्षसम्म पिताले शिक्षा देऊन् र नवौको प्रारम्भदेखि द्विजहरुले आफ्ना सन्तानहरुको उपनयन गराएर जहाँ पूर्ण विद्वान् तथा विदुषी स्त्री शिक्षा तथा विद्या-दान गरुन् त्यहाँ आफ्ना छोराछोरीलाई पठाऊन् । '

पुरुषहरु पुरुषको पाठशालामा तथा स्त्रीहरु स्त्रीको पाठशालामा पठाइयून् । पुरुषहरुको पाठशाला तथा स्त्रीहरुको पाठशालाको बिचमा कममा पनि दुई कोशको अन्तर होस् । कन्याहरुकवो पाठशालामा सबै स्त्री अध्यापक तथा अधिकारी होऊने भने पुरुषहरुको पाठशालामा सबै पुरुष अध्यापक होऊन् । स्त्रीहरुको पाठशालामा पाँच वर्षको पुरुष पनि जान नपाओस् तथा पुरुषहरुको पाठशालामा पनि पाँच वर्षकी स्त्री जान नपाऊन् । जबसम्म उनीहरु ब्रह्मचारिणी रहून् तबसम्म पुरुषको दर्शन , स्पर्शन , एकान्तवास , भाषण , विषय-कथा , परस्पर क्रीडा , विषयको ध्यान र संग यी आठ प्रकारका मैथुनदेखि अलग रहून् ।

यस विषयमा राज-नियम तथा जाति-नियम हुनु पर्छ कि पाँचौ वर्ष वा त्यो भन्दा पछि कोही पनि पुरुष वा कन्या घरमा नबसून् । सबै पाठशालामा पठाइयून् । जसले पठाउँदैन ऊ दण्डित हुनुपर्छ ।

स्वामी दयानन्दले नारी शिक्षाको महत्वलाई बुझ्नुभएको थियो किनकी माता नै शिशुकी प्रथम गुरु हुन् र त्यसैले नारी शिक्षित हुनु नितान्त जरुरी पनि छ । स्वामीजी शिक्षाका प्रबल पक्षधर हुनुहुन्थ्यो तर सह-शिक्षाका विरोधी हुनुहुन्थ्यो । त्यसैले उहाँले न केवल पुरुष र स्त्रीको पाठशाला अलग-अलग गराउने सन्देश दिनुभयो अपितु उनीहरुलाई पढाउने अध्यापकहरुको लागि पनि यही नियम विस्तार गर्नुभएको थियो जसअन्तर्गत केवल पुरुष अध्यापकहरुले पुरुष विद्यार्थीलाई पढाउँने र महिला अध्यापकहरुले स्त्रीहरुलाई पढाउँने व्यवस्थाको व्यवस्था थियो । यसो हेर्दा यो नियम समाजमा हुनेवाला दुराचार , बलात्कार , शारीरिक शोषण , चरित्रहीनता आदिबाट देशका युवा ( महिला-पुरुष ) को रक्षा गरेर उनीहरुलाई देशका लागि तैयार गर्ने एक दुरगामी सोँच थियो । स्वामीजी दुराचारको भावनालाई राष्ट्रका लागि विनाशकारी मान्नुहुन्थ्यो । उहाँको मान्यता थियो कि यदि माता-पिताको चरित्र उज्ज्वल भए सन्तान पनि सुयोग्य तथा चरित्रवान् हुन्छन् । स्वामीजीको चिन्तनमा आफ्ना सन्तानलाई अशिक्षित राख्ने माता-

पितालाई राजाद्वारा दण्डित गर्नु प्रशंसनीय छ किनकी यदि देशको पछिल्लोको पुस्ताको विकाश उचित प्रकारले गरियो तथा उनीहरुको नींव विधिवत् रुपले राखियो भने मात्र उनीहरु समाजका लागि जिम्मेदार नागरिक बन्न सक्छन् । जसको नींवमा नै दोष छ ऊ कसरी समाज र राष्ट्रको लागि आफ्ना कर्तव्यहरुको निर्वहण गर्न सक्छ । आजभन्दा १५० वर्ष पूर्व ऋषि दयानन्दका विचारले शिक्षाको प्रचार भयो जसका कारण देशमा हजारौ शिक्षण संस्थाहरु खुले , अनेक विद्यालय , गुरुकुल आदि प्रारम्भ भए जसले गर्दा शिक्षाक्षेत्रमा अभूतपूर्व प्रगति भयो । यो स्वामी दयानन्दको चिंतनको परिणाम थियो ।

शंका ४ : के वेद नारी शिक्षाको अधिकार दिन्छन् ?

समाधान : स्वामी दयानन्दले स्त्रीशुद्रौ नाधीयातामिति श्रुतेः अर्थात स्त्री र शुद्रले नपढून् यो श्रुति हो भन्ने विचारलाई नकार्दै वैदिक कालका गार्गी , मैत्रेयी , कात्यायनी आदि सुशिक्षित स्त्रीहरुको वर्णन गर्नुभएको छ जसले ऋषि-मुनिहरुको शंकाको पनि समाधान गर्दथे । ऋषि दयानन्दको प्रयास नारी जातिलाई शिक्षित , स्वावलम्बी तथा आत्मनिर्भर बनाउनु थियो , त्यसैले उहाँ नारी-शिक्षाका पक्षधर हुनुहुन्थ्यो । वेदहरुमा नारीहरुलाई शिक्षित बनाउनका लागि धेरै मन्त्रहरु छन् जस्तै ,

१. ऋग्वेद ६.४४.१८ को भाष्य गर्दै ऋषि दयानन्द लेख्नुहुन्छ कि ,राजा यस्तो यत्न गरुन् कि जसबाट सबै बालक एवं कन्याहरु ब्रह्मचर्यद्वारा विद्याले युक्त भएर समृद्धिलाई प्राप्त गरेर सत्य , न्याय र धर्मको बाटो हिँड्न सकून् ।

२. राजाले प्रयत्नपूर्वक आफ्नो राज्यमा सबै स्त्रीहरुलाई विदुषी बनाउनुपर्छ । -यजुर्वेद १०.७

३. विद्वान्हरुको यही योग्यता हो कि सबै कुमार र कुमारीहरुलाई पण्डित बनाउनु जसबाट सबै विद्याको फल प्राप्त गरेर सुमति होऊन् । - ऋग्वेद ३.१.२३

४. जति कुमारीहरु छन् उनीहरुले विदुषीहरुबाट विद्या अध्ययन गरुन् र ती कुमारी ब्रह्मचारिणीहरु विदुषीहरुसँग यही प्रार्थना गरुन् कि तपाई हामी सबैलाई विद्यायुक्त र सुशिक्षाले युक्त गराउनुहोस् । - ऋग्वेद २.४१.१६

यसरी ऋग्वेद र यजुर्वेदमा पनि नारीलाई शिक्षाको अधिकार दिइएको छ । यति स्पष्ट प्रमाण हुँदाहुँदै पनि मध्यकालमा नारीहरुलाई शिक्षाबाट वञ्चित राख्नु न केवल नारी जातिमाथि अत्याचार थियो अपितु वेदहरुको प्रचलनबाट सामान्य समाजको अनभिज्ञताको प्रदर्शन पनि थियो ।

शंका ४ : के वेदहरु सती प्रथाको समर्थन गर्दछन् ?

समाधान : १८७५ मा स्वामी दयानन्दले पुनामा दिइएको प्रवचनमा स्पष्टसँग भन्नुभएको थियो ‘ सती हुनु वेदको आज्ञा होइन ’।

वैदिक कालको इतिहासमा पनि कतै पनि सती भएको कुनै प्रमाण भेटिन्न । महाभारतमा पाण्डुको मृत शरीरसँगै माद्रीले आत्मदाह गरेको उल्लेख त पाइन्छ तर यसको कथित सती प्रथासँग कुनै सम्बन्ध छैन । मध्यकालमा जब अवनतिको क्रम चल्यो तब नारी जातिको दुर्गति आरम्भ भयो । सती प्रथा त्यही कालको देन हो ।

जहाँसम्म वेदहरुको प्रश्न छ सायणले अथर्ववेदको मन्त्र १८.३.१ म सती प्रथा दर्साउने प्रयास गरेका छन् । सायणका अनुसार यहाँ वेदहरु नारीलाई आदेश दिँदैछन् कि नारी अनादीशिष्टाचारसिद्ध , स्मृति पुराण आदिमा प्रसिद्ध सहमरणरुप धर्मको परिपालन गर्दै पतिलोक अर्थात जुन लोकमा पति गयो त्यस स्वर्गलोकलाई वरण गर्ने इच्छा सहित तिमी मृतसँग सहमरणका लागि आउँदै छिन् । अर्को जन्ममा तिमी यसलाई पुत्र-पौत्रादि प्रजा र धन प्रदान गर्नू । यसपछिको मन्त्रमा सायण भन्नुहुन्छ कि अर्को जन्ममा पनि उसलाई त्यही पति प्राप्त हुनेछ । त्यसैले यसो भनिएको हो ।

यहाँ सायणका अर्थलाई देखेर अनेक शंकाहरु उत्पन्न हुन्छन् । यस मन्त्रको सही अर्थ यस प्रकार छ । यी नारी आफ्नो पुरातन धर्मको पालना गर्दै पतिगृहलाई मन पराइरहेको अवस्थामा , हे मरण धर्मा मनुष्य ! तिमी मृतको समीप तल भूमिमा बसेकी छिन् । उनीलाई सन्तान र सम्पत्ती यहाँ सुम्प । अर्थात पतिको मृत्यु पश्चात् पत्नीको पतिको सम्पत्तिमा अधिकार हुन्छ । हाम्रो कथनको पुष्टि पछिको मन्त्रमा सायनले गर्दै भन्छने कि ‘ हे मृत पतिकी धर्मपत्नी ! तिमी मृत पतिको समीपबाट उठेर जीवलोकमा आऊ , तिमी यस निष्प्राण पतिको समीप के गरिरहेकी छौ ? पाणीग्रहणकर्ता पतिबाट तिमीले सन्तान पाइसकेकी छौ , उनको पालन पोषण गर । ’ - अथर्ववेद १८.३.२

सायणको यस मन्त्रको अर्थमा हामीलाई कुनै शंका छैन । दुवै मन्त्रहरुमा उनको अर्थको विरोधाभास हुनुले हाम्रै पक्षलाई नै सिद्ध गर्दछ ।

मध्यकालका बंगालका केही पंडितहरुले ऋग्वेद १०.१८.७ मा अग्रेको स्थानमा अग्ने पढेर सती प्रथालाई वैदिक सिद्ध गर्न खोजेका थिए ,परन्तु यो केवल असत्य कथन नै थियो । यस मन्त्रमा वधूलाई आगो होइन अग्रे अर्थात गृहमा प्रवेशको समयमा अगाडि हिँड्ने भनिएको छ ।

यस प्रकारले वेदका मन्त्रहरुको असत्य अर्थ निकालेर सती प्रथालाई वैदिक सिद्ध गर्ने प्रयास गरिएको थियो । धन्य हो आधुनिक भारतका विचारक राजा राममोहन राय , ईश्वर चन्द्र विद्यासागर , स्वामी दयानन्द सरस्वतीजीको जसको प्रयासले सती प्रथाको प्रचलन बन्द भयो ।

शंका ५ : के नारी जातिलाई वेदाध्ययन गर्ने अधिकार छैन ?

समाधान : केही अज्ञानीहरुले यो प्रचलित गरिदिएका छन् कि नारी तथा शुद्रलाई वेदाध्ययनको अधिकार छैंन परन्तु आजसम्म आफ्नो यो कथन पुष्टि गर्ने यौटा पनि वेदमन्त्रको देखाउन सकेका छैनन् । यसको विपरीत वेदहरुमा नारीहरुलाई वेदाध्ययन गर्नका लागि स्पष्ट सन्देश छ ।

ऋग्वेद १०.१९१.३ मा ईश्वर सन्देश दिँदै भन्दै हुनुहुन्छ कि हे समस्त नर नारीहरु ! तिमीहरुका लागि यी मन्त्रहरु समान रुपले दिइएका छन् तथा तिमीहरुको परस्पर विचार पनि समान रुपले होओस् । म तिमीहरुलाई समान रुपमा ग्रन्थको उपदेश गर्दछु ।

अथर्ववेदको १४.१.६४ मा नववधूलाई सम्बोधित गर्दै उपदेश दिइएको छ कि हे वधू ! तिम्रो अगाडि पछाडि , मध्य , अन्तमा सर्वत्र वेद विषयक ज्ञान होस् । तथा वेद ज्ञानलाई प्राप्त गरेर तदनुसार तिमी आफ्नो सारा जीवन बनाऊ । यसै प्रकारले यजुर्वेद १४.२ मा स्त्रीलाई उपदेश छ कि ‘ इमा ब्राह्मी पीपिही अर्थात सौभाग्य प्राप्तिका लागि पटक-पटक वेदमन्त्ररुपी अमृतको राम्ररी पान गर ।’

ऋग्वेद १.१.५ मा स्वामी दयानन्द लेख्नुहुन्छ कि जो कन्या २४ वर्ष पर्यन्त ब्रह्मचर्यपूवक अंग-उपांग सहित वेद विद्याहरुको अध्ययन गर्दछ , ऊ मनुष्य जातिलाई सुशोभित गर्नेवाला हुन्छ ।

यजुर्वेद १४.१४ को भाष्यमा स्वामीजी लेख्नुहुन्छ कि यदि मनुष्य यस सृष्टिमा ब्रह्मचर्य आदिले कुमार र कुमारीहरुलाई द्विज बनाए ऊ शीघ्र नै विद्वान हुन्छ ।

ऋग्वेद १.७१.२ को भाष्यमा स्वामीजी लेख्नुहुन्छ कि जसरी वैश्यहरु धर्मधारण गरेर धनोपार्जन गर्दछन् , त्यसैप्रकारले कन्याहरुको लागि पनि यो आवश्यक छ कि विवाहपूर्व शुभ ब्रह्मचर्य व्रतको धारण गरेर विदुषी अध्यापिका बनेर सुशिक्षा एवं वेदविद्याको संचय पश्चात् विवाह गरुन् ।

ऋग्वेद १.११९.५ को भाष्यमा स्वामी दयानन्द लेख्नुहुन्छ कि जसरी ब्रह्मचर्यको पालन गर्दै यौवनावस्थामा पुगेकी विदुषी कन्या आफ्नो पतिको निरन्तर सेवा गर्छिन् र जसरी ब्रह्मचर्यको पालन गर्दै जवान पुरुष आफ्नो प्रीतिको अनुकूल चाहेकी पत्नीलाई पाएर आनन्दित हुन्छ , त्यसरी नै सभा र सेनापतिहरु पनि होऊन् । यसैप्रकारको आशय ऋग्वेद ५.३२.११ मा पनि पाइन्छ । महाभारत आदिपर्व १३१.१० मा स्पष्ट रुपमा लेखिएको छ कि जसको धन समान हुन्छ र वेदशास्त्रविषयक ज्ञान पनि समान हुन्छ , उनीहरुको बिच मित्रता एवं विवाह आदि हुनसक्छ , बलवान र सर्वथा निर्बलहरुको बिचमा होइन ।

वेदहरुमा स्त्रीहरुलाई विदुषी बन्न तथा आफ्नो गुण, कर्म र स्वभाव अनुरुपको गुणशाली वर छान्ने अधिकार दिइएको छ । यस प्रकारले वेदहरुका अनेक मन्त्रहरुमा स्त्रीहरुलाई वेदाध्ययनको प्रेरणा दिन्छन् ।

वेदहरुमा अनेक सूक्तहरु छन् जस्तै ऋग्वेद १०.१३४ , १०.४० , ८.९१ , १०.९५ , १०.१०७ , १०.१०९ , १०.१५४ , ५.२८ आदि जसका ऋषिकाहरु गोधा , घोषा , विश्वधारा , अपाला , उपनिषत् , निषत् , रोमशा आदि रहेका छन् । यी ऋषिकाहरु न केवल वेदहरुको अध्ययन गर्दथे र रहस्यलाई जान्दथे अपितु वेदहरुको प्रचार पनि गर्दथे । यी ऋषिकाहरुको सूची बृहत् देवता अध्याय २४.८४ -८६ मा भेटिन्छ । ऋषिकाहरुलाई ब्रह्मवादिनी पनि भनिन्थ्यो र यिनीहरुको नियमपूर्वक उपनयन , वेदाध्ययन , गायत्री मंत्रको उपदेश आदि हुन्थ्यो ।

शंका ६ : के नारी जातिलाई यज्ञमा भाग लिने अधिकार छैन ?

समाधान : वैदिक कालमा नारी जातिलाई यज्ञमा भाग लिने पूर्ण अधिकार थियो जसलाई मध्यकालमा वर्जित गरियो । कुही ग्रन्थले त यस विषयलाई यति सम्म प्रचलित गरिदिए कि नारीको स्थान यज्ञवेदीभन्दा बाहिरको हो र युवती अग्नीहोत्रमा होता बन्ने विधान छैन । वेदहरु परम प्रमाण हुन् त्यसैले यस विषयको समाधान वेदबाट नै गरिनु उपयुक्त छ । वेदहरु नारी जातिलाई यज्ञमा भाग लिने पूर्ण अधिकार दिन्छन् ।

ऋग्वेद ८.३१.५-८ मा भनिएको छ कि जो पति - पत्नी समान मनका भएर यज्ञ गर्दछन् उनीहरुलाई अन्न , पुष्प , हिरण्य आदिको कमी हुँदैन ।

ऋग्वेद १०.८५.४७ मा भनिएको छ कि विवाह यज्ञमा वर वधू उच्चारण गर्दै एक अर्काको हृदय स्पर्श गर्दछन् ।

ऋग्वेद १.७२.५ मा भनिएको छ कि विद्वान् व्यक्ति आफ्नी पत्नीसँग यज्ञमा बस्दछ र नमस्करणीय ( नमस्कार गर्न योग्य ) लाई नमस्कार गर्दछ ।

यसै प्रकारले यजुर्वेद ३.४४ र अथर्ववेद ३.२८.६ मा पनि यज्ञमा नारीले भाग लिनुलाई लिएर स्पष्ट प्रमाण रहेको छ ।

शंका ७ : के यज्ञमा नारीलाई ब्रह्मा बन्ने अधिकार छ ?

समाधान : यज्ञमा ब्रह्माको पद सबैभन्दा माथिल्लो पद रहेको छ । ऐतरेय ब्राह्मणका अनुसार ज्ञान , कर्म र उपासना तीनै विद्याहरुको प्रतिपादक वेदको पूर्ण ज्ञानले नै मनुष्य ब्रह्मा बन्न सक्छ । शतपथ ब्राह्मण ११.५.७ मा यसै तथ्यको समर्थन गरिएको छ । गोपथ ब्राह्मण १.३ को अनुसार सबैभन्दा अधिक परमेश्वर र वेदहरुका ज्ञातालाई ब्रह्मा बनाउनुपर्छ ।

ऋग्वेद ८.३३ मा नारीलाई भनिएको छ कि स्त्री बभूविथ अर्थात् यस प्रकारले उचित सभ्यताको नियमहरुको पालन गर्दै नारी निश्चित रुपले ब्रह्मा पद पाउन योग्य बन्न सक्छ ।

जब वेदहरुमा स्पष्ट रुपले नारी जातिलाई यज्ञमा ब्रह्मा बन्ने आदेश छ भने अन्य ग्रन्थद्वारा यसको विरोधमा यदि प्रमाण प्रस्तुत गरे पनि त्यो अमान्य छ किनकी मनुस्मृति २.१३ मा लेखिएको छ कि धर्मलाई जान्ने इच्छा राख्नेहरुका लागि वेद नै परम प्रमाण हुन् ।

शंका ८ : के वेदहरुमा दाइजो आदि प्रथाको विधान छ , जसका कारण आज नारी जातिले यति अत्याचार भोगिरहनु परेको छ ?

समाधान : वेदहरुमा पुत्रीलाई दाइजोले अलंकृत गर्ने आदेश दिइएको छ तर यहाँ दाइजोको वास्तविक अर्थ हालको प्रचलित अर्थ भन्दा फरक छ । अथर्ववेद १४.१.८ को मन्त्रमा पिताले कन्यालाई स्तुति वृत्तिवाला बनाउनु नै पुत्रीका लागि सच्चा दाइजो हो । यहाँ स्तुति वृत्तिको भाव हो कि पुत्री सदा अर्काको गुणको प्रशंसा गर्नेवाली बनून् , कसैको पनि अवगुणहरुप्रति ध्यान नदिनेवाली होऊन् अर्थात् परनिन्दा नगर्नेवाली होऊन् । एवं उसका गहना उसको भद्रता , उसको शिष्टाचार र उसको प्रभुगान गर्ने वृत्ति होस् ।

यहाँ पुत्रीलाई गुणहरुले सुशोभित गर्नु सच्चा दाइजो दिनुको समान मानिएको छ । कालान्तरमा केही लोभी मान्छेहरुले दाइजोको अर्थ धन सम्झिए जसले गर्दा उनीहरुको लोभ बढ्दै गयो एवं त्यसको परिणाम नारी जातिमाथि अत्याचारको रुपमा आयो जो निश्चित रुपमा सभ्य समाजको मुखमा कलंकको समान छ ।

शंका ९ : के वेदहरुमा केवल पुत्रको कामना गरिएको छ ?

समाधान : आज समाजमा कन्या भ्रुण हत्या जस्तो महापाप प्रचलित भएको छ जसको मुख्य कारण नारी जातिको समाजमा उचित सम्मान न हुनु , धन आदिको रुपमा दाइजोको कुरीतिहरु हुनु , समाजमा बलात्कार जस्ता घटनाहरु बढ्नु , चरित्र दोष आदि छन् जसबाट नारी जातिको रक्षा गर्न कठिन भइसकेको छ । यस्तो परिवेशमा समाजमा पुत्रको अभिलाषा अधिक बढेको छ भने पुत्रीलाई बोझका रुपमा लिइएको पाइन्छ । केही दुष्टहरुले त यहाँसम्म भ्रमित प्रचार गरेका छन् कि वेद नारीहरुलाई हीन भावले हेर्दछ र वेदमा सर्वत्र पुत्रको माँग गरिएको छ । सत्य त यो हो कि वेदहरुमा पत्नीलाई उषाको समान प्रकाशवती , वीरांगना , वीरप्रसवा , विद्या अलंकृत , स्नेही आमा , पतिव्रता ( पतिको वरण गर्नेवाली ) , अन्नपूर्णा

, सद्गृहणी , र सम्राज्ञी आदिले सम्बोधित गरिएको छ जो निश्चित रुपमा नारी जातिलाई उचित सम्मान प्रदान गर्दछन् । उदाहरणका लागि वेदहरुबाट नारी जातिको यशगाथाको लागि केही वेदमन्त्रहरुको भावार्थ यहाँ प्रस्तुत गरिँदै छन् :

१ मेरो पुत्र शत्रुहन्ता होस् र पुत्री पनि तेजस्वीनी होस् । - ऋग्वेद १०.१५९.३

२. यज्ञ गर्नेवाला पति-पत्नी र कुमारी हुनेहरु हुन्छन् । - ऋग्वेद ८.३१.८

३. प्रति प्रहर हाम्रो रक्षा गर्नेवाला पूषा परमेश्वर हामीलाई कन्याहरुको भागी बनाऊन् अर्थात् कन्या प्रदान गरुन् । - ऋग्वेद ९.६७.१०

४. हाम्रा राष्ट्रहरुमा विजयशील सभ्य युवकहरु पैदा होऊन् र त्यहाँ सँगसँगै बुद्धिमती नारीहरु पनि उत्पन्न होऊन् भन्ने प्रार्थना छ । - यजुर्वेद २२.२२

५. जस्तो यश कन्यामा हुन्छ त्यस्तो यश मलाई प्राप्त होस् । - अथर्ववेद १०.३.२०

यस प्रकार वेदहरुमा नारी जातिको महिमामण्डन गरिएको छ न कि उनीहरुलाई अवाञ्छनीय मानेर केवल पुत्रकोम माँग गरिएको छ ।

शंका १० : के वेदहरुमा बहु-विवाह आदिको विधान छ ?

समाधान : वेदहरुको विषयमा यौटा यो भ्रम पनि फैलाइएको छ कि वेदहरुमा बहुविवाहको अनुमति दिइएको छ ।

वेदहरुमा स्पष्ट रुपमा एक पत्नीको विधान बताइएको छ ।

ऋग्वेद १०.८५ लाई विवाह सूक्तका रुपमा लिइएको छ । यस सूक्तको मन्त्र ४२ मा भनिएको छ कि तिमी दुवै यस संसार व गृहस्थ आश्रममा सुखपूर्वक निवास गर । तिमीहरुको कहिल्यै परस्पर वियोग नहोस् र सदा प्रसन्नतापूर्वक आफ्नो घरमा बस । यहाँ हरेक मन्त्रमा तिमी दुइटा अर्थात पति र पत्नी आएको छ । यदि बहुपत्नीको विधान भएको भए तिमीहरु सबै भन्ने पदावली आउने थियो ।

ऋग्वेद ७.३५.४७ मा आउँछ कि हामी दुवै ( वर-वधू ) सबै विद्वान्हरुका सामु घोषणा गर्छौं कि हामी दुवैको हृदय जलसमान शान्त र परस्पर मिलेको हुनेछ ।

अथर्ववेद ७.३५.४ मा पति पत्नीको मुखबाट कहलाइएको छ कि तिमी मलाई आफ्नो हृदयमा बसाऊ , हामी दुवैको मन एक होओस् ।

अथर्ववेद ७.३८.४ मा पत्नी भन्दछिन् कि तपाई केवल मेरा भएर बस्नुहोस् र अन्य स्त्रीहरुको कहिल्यै पनि कीर्तन र व्यर्थ प्रशंसा आदि नगर्नुहोस् ।

ऋग्वेद १०.१०१.११ मा बहुविवाहको निन्दा गर्दै वेदहरु भन्दछन् कि जसरी रथको घोडा दुवै धुराहरुको मध्यमा दबेर हिड्दछ त्यसरी नै एक समयमा दुई स्त्रीहरुसँग सम्बन्ध राख्ने पति हुन्छ अर्थात परनन्त्र हुन जान्छ त्यसैले एक समयमा दुई वा दुईभन्दा बढी पत्नीसँग सम्बन्ध राख्नु उचित छैन । यस प्रकार

वेदहरुमा बहुविवाह विरुद्ध स्पष्ट उपदेश रहेको छ । वेदहरुको आलङ्कारिक भाषा बुझ्नमा गल्ती भएको कारण यसप्रकारको भ्रान्ति भएको हो ।

शंका ११ : के वेदहरुमा बालविवाहको समर्थन गरिएको छ ?

समाधान : भारतमा विशेष गरी मुस्लिमहरुको आक्रमण पश्चात बालविवाहको कुरीतिलाई समाजले अपनायो जसद्वारा न केवल ब्रह्मचर्य आश्रम लुप्त भएर गयो बरु शरीरको सही ढंगको विकास नभएको कारण एवं कम उमेरमा माता पिता बन्नु परेकाले सन्तानहरु पनि कमजोर जन्मिदैं गए जसद्वारा हिन्दु समाज नै दुर्बल भयो ।

अथर्ववेदको ब्रह्मचर्य सूक्तको ११.५.१८ मन्त्रमा भनिएको छ कि ब्रह्मचर्य ( सादा , संयम र तपस्या ) जीवन बिताएर नै कन्या युवा पतिलाई प्राप्त गर्दछिन् । यस मन्त्रमा नारीले युवा पतिसँग मात्र विवाह गर्ने प्रावधान बताइएको छ जसबाछ कि बालविवाह गर्ने स्पष्ट निषेध गरेको बुझ्न सकिन्छ । ऋग्वेद १०.१८३ सूक्तमा वर वधू मिलेर सन्तान उत्पन्न गर्नेबारे भनिएको छ । वधु वरसँग भन्दछिन् कि तिमी पुत्रकाम हौ अर्थात तिमी पुत्रको इच्छा गर्दछौ । वर वधुसँग भन्दछन् कि तिमी पुत्रकामा हौ अर्थात तिमी पुत्र चाहन्छौ , अतः हामी दुवै मिलेर उत्तम सन्तान दुवै मिलेर उत्तम सन्तान नै उत्पन्न गरौं । पुत्र अर्थातत सन्तान उत्पन्न गर्ने कामना युवा पुरुष र युवतीमा नै उत्पन्न हुन सक्छ । साना-साना बालक एवं बालिकामा होइन ।

यसै प्रकारले अथर्ववेद २.३०.५ मा पनि परस्पर युवक र युवती एकअर्कालाई प्राप्त गरेर भन्दै छन् कि म पतिकामा अर्थात पतिको कामना गर्नेवाली र यी जनीकाम अर्थात् पत्नीको कामना गर्नेवाला दुवैको मिलन भइसकेको छ । युवा अवस्थामा नै पति-पत्नीको कामनाको कामनाको इच्छा हुन सक्छ । साना साना बालक र बालिकाहरुमा यो इच्छा हुँदैन । यी प्रमाणहरुबाट पनि सिद्ध हुन्छ कि वेद बालविवाहको समर्थन गर्दैनन् ।

शंका १२ : वेदहरुमा नारीको महिमाको संक्षेपमा वर्णन बताउनुहोस् ?

समाधान : संसारको कुनै पनि धर्म पुस्तकमा नारी जातिको महिमाको यति सुन्दर गुणगान पाइँदैन जति वेदहरुमा पाइन्छ । केही उदाहरणहरुबाट हामी आफ्नो कथनलाई सिद्ध गर्नेछौं ।

१. उषा समान प्रकाशवती - हे राष्ट्रकी पुजा योग्य नारी ! तिमी परिवार र राष्ट्रमा सत्यम् , शिवम् र सुन्दरम्को अरुण कान्तिहरु छिट्दै आऊ , आफ्नो विस्मयकारी सद्गुणहरुद्वारा अविद्याले ग्रस्त जनहरुलाई प्रबोध प्रदान गर । जन जनलाई सुख दिन आफ्नो जगमग गर्ने रथमा बसेर आऊ । - ऋग्वेद ४.१४.३

२. वीराङ्गना - हे नारी ! तिमी स्वयंलाई चिन । तिमी सिंहिनी हौ , तिमी शत्रुरुप मृगहरुको मर्दन गर्नेवाली हौ , देवजनहरुको हितार्थ आफूभित्र सामर्थ्य उत्पन्न गर । हे नारी ! तिमी अविद्या आदि दोषहरु माथि सिंहनी समान फाल हाल्नेवाली हौ , तिमी दिव्य गुणहरुको प्रचारार्थ स्वयंलाई शुद्ध गर ! हे नारी ! तिमी दुष्कर्म एवं दुर्व्यसनीहरुलाई सिंहनीसमान विनष्ट गर्नेवाली हौ , धार्मिक जनहरुको हितार्थ स्वयंलाई दिव्य गुणहरुले अलंकृत गर । - यजुर्वेद ५.१०

३. वीरप्रसवा ( वीरहरु जन्माउने ) - राष्ट्रलाई नारी कस्तो सन्तान देऊन् - हाम्रो राष्ट्रलाई यस्ता अद्भूत एवम् वर्धक सन्तान प्राप्त होऊन् जो उत्कृष्ट कोटिका हतियार चलाउन कुशल , उत्तम प्रकारले आफ्नो तथा अरुको रक्षा गर्नमा प्रवीण , सम्यक् नेतृत्व गर्ने धर्म-अर्थ-काम-मोक्ष रुप चार पुरुषार्थ - समुद्रको अवगाहन गर्न सक्ने , विविध सम्पदाहरुका धारक , अतिशय क्रियाशील , प्रशंसनीय , धेरैमा वरणीय , आपत्हरुको निवारक होऊन् । - ऋग्वेद १०.४७.३

४. विद्या अलकंकृत नारी आफ्नो विद्या-बलहरुले हाम्रो जीवनलाई पवित्र गरिरहून् । उनी कर्मनिष्ठ बनेर हाम्रो व्यवहारहरुलाई पवित्र गरिरहून् । आफ्नो श्रेष्ठ ज्ञान एवं कर्महरुद्वारा सन्तानहरु तथा शिष्यहरुमा सद्गुण र सत्कर्महरुलाई स्थित गर्नेवाली ती देवी गृह आश्रम - यज्ञ एवं ज्ञान-यज्ञलाई सुचारु गरिरहून् । -यजुर्वेद २०.८४

५. स्नेहमयी आमा - हे प्रेमरसमयी आमा ! तुम हाम्रो लागि मङ्गलमयी बन , तिमी हाम्रो लागि शान्तिको वृष्टि गर्नेवाली बन , तिमी हाम्रो लागि उत्कृष्ट सुख दिनेवाली बन । हामी तिम्रो कृपा दृष्टिले कहिल्यै वञ्चित नहोऔ । - अथर्ववेद ७.६८.२

६. अन्नपूर्णा - यस गृह आश्रममा पुष्टि प्राप्त होओस् , यस गृह आश्रममा रस प्राप्त होओस् , यस गिरः आश्रममा हे देवी ! तिमी दूध - घिउ आदि सहस्र पोषक पदार्थहरुको दान गर । हे यम - नियमहरुको पालन गर्नेवाली गृहणी ! जुन गाई आदि पशुहरुबाट पोषक पदार्थहरु प्राप्त हुन्छन् , तिनीहरुको तिमी पोषण गर ।

- अथर्ववेद ३.२८.४

अन्तमा मनुस्मृतिमा प्रचलित श्लोकद्वारा यस विषयलाई विराम दिन चाहन्छु । संसारमा नारी जातिलाई सम्मान दिनको लागि सायद नै यो भन्दा सुन्दर शब्द कतै भेटियोस् र

यत्र नायस्तु पूज्यन्ते रमन्ते तत्र देवताः ।

यत्रैतास्तु न पूज्यन्ते सर्वास्तत्राफलाः क्रियाः ॥ - मनुस्मृति ३.७६

जुन कुलमा नारीहरुको पूजा अर्थात सत्कार हुन्छ , त्यसकुलमा दिव्यगुण , दिव्य भोग र उत्तम सन्तान हुन्छन् र जुन कुलमा स्त्रीहरुको पूजा हुँदैन , त्यहा सबै क्रियाहरु निष्फल हुन्छन् ।

वेदहरुको विषयमा केही जनसमुदायमा के भ्रान्ति रहेको छ भने वेदहरु धार्मिक ग्रन्थ हुँदाहुँदै पनि यसमा अश्लीलताको वर्णत छ । यस विषयलाई जान्न नितान्त आवश्यकता रहेको छ किनकी यस भ्रान्तिका कारण वेदहरुप्रति साधारण जनसमुदायको आस्था एवं विश्वास प्रभावित भइरहेको छ ।

पाश्चात्य विद्वान् ग्रिफ्फिथ महोदयले यस विषयमा ऋग्वेद १.१२६ सूक्तका सात मध्ये पाँच मन्त्रको भाष्य गरेपछि अन्तिम दुई मन्त्रको भाष्य गरेका छैनन् । एवं परिशिष्टमा तिनको ल्याटिन भाषामा अनुवाद दिएर यस विषयमा टिप्पणी लेखेका छन् कि यिनलाई पढेर यस्तो लाग्छ कि मानौं यी मन्त्र कुनै असभ्य उच्छृङ्खल , मर्यादाहीनहरुको प्रेमगीतका अंश हुन् ।

ग्रिफ्फिथ महोदय आफ्नो यजुर्वेदको भाष्यमा पनि २३ अध्यायको १९ औं मन्त्र पछि सिधै ३२ औ मन्त्रको भाष्यमा आउँछन् । २० औ मन्त्रको विषयमा उनको टिप्पणी छ कि यो र यसपछिका ९ मन्त्रहरु युरोपका कुनै सभ्य भाषामा वर्णन गर्न योग्य छैनन् । एवं ३० औ तथा ३१ औ मन्त्र नपढे कुनै लाभ छैन ।

विदेशी विद्वान्हरु वेदका जुन मन्त्रमा अश्लीलताको वर्णन गर्छन् तिनीमध्ये केही यस प्रकारका छन् -

ऋग्वेद १.१२६.६ - ७

ऋग्वेद १.१६४.३३ र ऋग्वेद ३.३१.१

यजुर्वेद २३.२२- २३

अथर्ववेद १.११.३ - ६

अथर्ववेद ४.४.३-८

अथर्ववेद ६.७२.१-३

अथर्ववेद ६.१०१.१-३

अथर्ववेद ६.१३८.४- ५

अथर्ववेद ७.३५.२-३

अथर्ववेद ७.९०.३

अथर्ववेद २०.१२६.१६ - १७

अथर्ववेद काण्ड २० सूक्त १३६ मंत्र १ -१६

शंका १ : वेदहरुमा अश्लीलताको आक्षेप हुनुका के कारण हुन् ?

समाधान : वेदहरुमा कुनै किसिमको अश्लीलता छैन। संस्कृत भाषामा यौगिक , रुढि एवं योगारुढि गरेर तीन किसिमका शब्दहरु हुन्छन् । कुनै पनि शब्दको रुढ अर्थ तब लिइन्छ जब त्यसलाई कुनै विशेष अर्थमा धेरै लामो समयसम्म प्रयोगमा ल्याइन्छ । वैदिक भाषा आदि भाषा हो । यसका शब्दहरुको रुढ अर्थ लिन सकिन्न । त्यस्तै वेदहरुमा यी शब्दहरु अवश्य छन् - लिंग , शिश्न , योनि , गर्भ , मिथुन आदि । तर यी शब्दहरुबाट वर्तमानमा प्रचलित अर्थ लिन सकिन्न । आज पनि हामी यी शब्दहरुलाई हामी सामान्य भावमा ग्रहण गर्छौं , जस्तै लिंगको प्रयोग पुल्लिंग एवं स्त्रीलिंगमा गरिन्छ । योनिको प्रयोग मनुष्य योनि एवं पशु योनिको भेद गर्नको लागि गरिन्छ । गर्भ शब्दको प्रयोग पृथ्वीको गर्भ एवं हिरण्यगर्भको लागि प्रयुक्त हुन्छ । यसप्रकार अनेक शब्दहरुको उदाहरण लौकिक एवं वैदिक साहित्यहरुबाट दिन सकिन्छ जसमा सभ्य मनुष्यले अश्लीलता देख्दैन । श्लीलता र अश्लीलतामा केवल मनोवृत्तिको अन्तर छ। वेदका शब्दहरुको यौगिक अर्थ ग्रहण गरिन्छ । जस्तै ' माताको रजलाई शीरमा धारण गर ' को तात्पर्य पदको धुलो हो न कि ' रजस्वला ' भाव । यसप्रकार शब्दहरुका अर्थहरुको अनुकूल एवं उचित प्रयोगद्वारा नै तथ्यको सही भाव ज्ञात हुन्छ । यस भ्रान्तिको एक कारण केही मन्त्रहरुमा अर्थहरुको अस्वाभाविक एवं पक्षपातपूर्ण प्रयोग गरेर तिनमा व्यभिचार अथवा अश्लीलता दर्साउनु हो । एक कारण तथ्यलाई गलत परिप्रेक्ष्यमा बुझ्नु पनि हो । एक उदाहरण स्वरुप - चिकित्सा विज्ञानका पुस्तकहरुमा मानव गुप्तेन्द्रियहरुका चित्रहरु देखेर कोही यो भन्दैन कि यो अश्लीलता हो , किनकी त्यसमा शिक्षाको प्रयोजन रहेको हुन्छ । त्यसैप्रकारले वेद ईश्वर प्रदत्त ज्ञान हो । वेदमा जे पनि छ त्यो शिक्षा दिने उद्देश्यले रहेको छ । त्यसैले वेदमा अश्लीलता मान्नु एक भ्रान्तिको अतिरिक्त केही होइन ।

शंका २ : यदि वेदहरुमा अश्लीलता छैन भने अनेक मन्त्रहरुमा किन प्रतीत हुन्छ ?

समाधान : वेदहरुमा अश्लीलता प्रतीत हुनुको प्रमुख कारण केही विनियोगकार , अनुक्रमणीकार , सायण , महीधर जस्ता भाष्यकार र तिनीहरुको अनुशरण गर्ने पश्चिमी र केही भारतीय लेखक हुन् । यदि स्वामी दयानन्द र यास्काचार्यको पद्धतिले शब्दहरुको सत्य अर्थमा विचार गरिएको हुन्थ्यो त वेद मन्त्रहरुमा ज्ञान-विज्ञान विरुद्ध केही भेटिदैनथ्यो । केही उदाहरणद्वारा हामी यस शंकाको निवारण गर्नेछौं । ऋग्वेद १.१२६ को छैठौं र सातौ मन्त्रको सायणचार्य , स्कन्दस्वामी आदिले राजा भावतव्य र उनकी पत्नी रोमशाको अत्यन्त अश्लील संवादको वर्णन गरेका छन् । पाठकहरुले सम्बन्धित भाष्यकारहरुको भाष्यमा हेर्नसक्नु हुन्छ । तिनै मन्त्रको स्वामी दयानन्दले सुन्दर एवं शिक्षाप्रद अर्थ गर्नुहुन्छ । यस मन्त्रमा राजाको ( जो उत्तम गुणले सिकाउन सकोस् र सबैले जसको ग्रहण गर्दै सुगमताका साथ गर्न सकून् ) प्रजाप्रति कर्त्तव्यको वर्णन गर्दै व्यवहारशील एवं प्रयत्नशील प्रजालाई सयौं प्रकारका भोज्य पदार्थ दिन सकिने राजनीति गर्ने सुझाव दिइएको छ । अर्को मन्त्रमा राजाझैं उनकी पत्नी पनि विदुषी एवं राजनीतिमा निपुण बन्ने तथा प्रजा , विशेष रुपमा स्त्रीहरुको न्याय गर्नमा राजाको सहयोगिनी बन्ने आदेश दिइएको छ । ऋग्वेद १.१६४.३३ तथा ऋग्वेद ३.३.११ मा पक्षपाती भाष्यकारहरुद्वारा प्रजापतिले आफ्नी छोरी उषा र प्रकाशसँग सम्भोग गर्ने इच्छा गरेको बताइएको छ , जसलाई रुद्रले विफल गरिदिन्छन् । त्यसकारण प्रजापतिको वीर्य धर्तीमा खसेर नष्ट हुन्छ । यस्ता अश्लील अर्थहरु देखेर विधर्मीहरु वेदमा पिता-पुत्रीबिच अनैतिक सम्बन्ध भएको आक्षेप लगाउँछन् । स्वामी दयानन्द यी मन्त्रहरुको निरुक्त एवं शतपथको उदाहरण दिँदै अर्थ गर्नु हुन्छ कि प्रजापति भनिन्छ सूर्यलाई र उसका दुई पुत्री उषा ( प्रातः कालमा देखिने लालिमा ) र प्रकाश हुन् । सारा लोकलाई सुख दिने हुनाले सूर्य पिता समान छन् र मान्यको हेतु हुनाले पृथ्वी माताका समान

छिन् । जसरी दुई सेना आमने-सामने हुन्छन् , त्यसरी नै सूर्य र पृथ्वी पनि आमने-सामने छन् र प्रजापति पिता सूर्य मेघ रुपी वीर्यद्वारा पृथ्वीमा गर्भ स्थापना गर्दछन् जसबाट अनेक औषधीहरु उत्पन्न हुन्छन् र जगत्को पालन हुन्छ । यहाँ रूपक अलंकार छ , जसको वास्तविक अर्थलाई नबुझेर प्रजापतिले आफ्नै छोरीहरूसँग अनैतिक सम्बन्ध बनाएको कपोलकल्पित कथा बनाइएको छ । इन्द्र र अहिल्याको कथा हामी ब्राह्मण , रामायण , महाभारत , पुराण आदि ग्रन्थहरूमा पाउँछौं जहाँ भनिएको छ कि स्वर्गको राजा इन्द्रले गौतम ऋषिकी पत्नी अहिल्यामाथि आसक्त भएर उसँग सम्भोग गर्यो । ती दुवैलाई एकान्तमा देखेर गौतम ऋषिले श्राप दिए र जसको परिणामवश अहिल्या ढुङ्गा बनिन् । आफ्नो गल्ती मानेर जब अहिल्या श्राप निवृत्तिहेतु याचना गर्छिन् तब गौतम ऋषि भन्छन् कि जब श्री रामले जब आफ्ना चरणले तलाई छुनेछन् अनि त श्रापमुक्त हुनेछेस् । यस कथाको आलङ्कारिक अर्थ यस प्रकार छ - अहिल्या रात्री र गौतम चन्द्रमा हुन् । चन्द्रमा रूपी गौतम रात्री रूपी अहिल्यासँग मिलेर प्राणीहरूलाई सुख दिन्छन् । इन्द्र यानी सूर्यको प्रकाशले रात्री निवृत्त हुन्छ अर्थात गौतम र अहिल्याको सम्बन्ध समाप्त हुन्छ । यजुर्वेदको २३.१९-३१ म अश्वमेध यज्ञपरक अर्थहरूमा महीधरका अश्लील अर्थहरू देखेर जसलाई पनि ग्लानी हुन्छ । यी मन्त्रहरूमा उनले यजमान राजाकी पत्नीद्वारा अश्वको लिङ्ग पक्रेर आफ्नो योनीमा हाल्ने , पुरोहितद्वारा राजाका पत्नीहरूसँग अश्लील अर्थ गरिएको छ । पाठकहरूले सम्बन्धित भाष्यकारहरूका भाष्य हेर्न सक्नुहुन्छ । स्वामी दयानन्दले ऋग्वेदादिभाष्यभूमिकामा यी मन्त्रहरूको वास्तविक अर्थ यस प्रकार गर्नुभएको छ - राजा प्रजा हामी दुवै मिलेर धर्म , अर्थ , काम र मोक्षको सिद्धिको प्रचारको लागि सदा प्रवृत्त रहौं । कुन प्रयोजनको लागि ? दुवैको सुखस्वरूप स्वर्गलोगमा प्रिय आनन्दको स्थितिको लागि , जसद्वारा हामी दुवै परस्पर तथा सबै प्राणीहरूलाई सुखले परिपूर्ण गर्न सकौं । जुन राज्यमा मनुष्यहरूले ईश्वरलाई राम्ररी जानेका हुन्छन् , त्यो देश सुखयुक्त हुन्छ । यसबाट राजा र प्रजा परस्पर सुखको लागि सद्गुणका उपदेशक पुरुषको सदा सेवा गरून् र विद्या तथा बललाई सदा बढाऊन् ।

ऋग्वेद ७.३३.११ को आधारमा यौटा कथा प्रचलित गरिएको छ कि उर्वशीको दर्शनपछि मित्र-वरुणको वीर्य स्खलित हुन्छ । त्या वीर्य यौटा घडामा खस्यो जसबाट वसिष्ठ ऋषिको जन्म भयो । यस्तो अश्लीलताले भरिएको कथा पढेपछि पाठको पनि बुद्धि भ्रष्ट हुन्छ ।

यस मन्त्रको वास्तविक अर्थ यस प्रकारको छ - अथर्ववेद ५.१९.१५ मा मित्र र वरुण वर्षाका अधिपति यानि वायु मानिएका छन् , ऋग्वेद ५.४१.१८ का अनुसार उर्वशी बिजुली हुन् र वसिष्ठ वर्षाका जल हुन् । मतलब जब आकाशमा चिसो र तातो हावाहरुको ( मित्र -वरुण ) मेल हुन्छ , तब बिजुली (उर्वशी ) चम्किन्छ र वर्षा ( वसिष्ठ ) को उत्पत्ति हुन्छ । यस मन्त्रको सत्य अर्थ पूर्ण रूपले वैज्ञानिक छ ।

यसप्रकार वेदहरूमा जुन जुन मन्त्रहरूमा अश्लीलताको आक्षेप लाग्छ , त्यसको कारण मन्त्रहरूको गलत अर्थ गर्नु हो । अधिक जानकारीका लागि स्वामी दयानन्द , विश्वनाथ वेदालङ्कार , आचार्य प्रियव्रत वेदवाचस्पति , धर्मदेव विद्यामार्तण्ड , स्वामी सत्यप्रकाश , डा. ज्वलन्त कुमार शास्त्री आदिका साहित्य-रचनाहरू द्रष्टव्य छन् जसको पर्याप्त सहायता यस लेखमा लिइएको छ ।

शंका ३ : वेदहरूमा यम-यमी जो कि भाइ बहिनी हुन् , उनीहरूबीच अश्लील संवाद हुनुलाई तपाई के भन्नुहुन्छ ?

समाधान : वेदहरूका विषयमा आफ्ना विचार प्रकट गर्दा पाश्चात्य एवं भारतीय विद्वान्‌हरूले पूर्वाग्रहको ग्रस्तताले वेदहरूको सत्य ज्ञानको प्रचारित गर्नुको साटो अनेक भ्रामक तथ्यहरूको प्रचारमा आफ्नो सारा श्रम खेर फाले । यम र यमी सूक्तको विषयमा पनि यिनै तथाकथित विद्वान्‌हरूको मान्यता यसको उदाहरण हो । वास्तवमा विकासवादको विचारधारालाई सिद्ध गर्ने प्रयासले यी लेखकहरूलाई यो भन्न बाध्य बनायो कि आदि कालमा मानवहरू अशिक्षित एवं जङ्गली थिए । विवाह सम्बन्ध , परिवार , नाता सम्बन्ध आदिको प्रचलन पछिको कालखण्डमा विषयहरू हुन् । श्रीपाद अमृत डांगे लेख्नुहुन्छ कि - ' यस प्रकारका गुणहरूमा परस्पर भिन्न नाता र सम्बन्धहरूको जानकारी नहुनु स्वाभाविक नै थियो । परन्तु यस प्रकारको अनियन्त्रित सम्बन्ध संतति विकासको लागि हानिकारक हुने भएकाले सर्वप्रथम माता पिता एवं उनीहरूका बालबच्चाबिच सम्भोगमा नियन्त्रण लगाइयो र यस प्रकार कुटुम्ब व्यवस्थाको सूत्रपात भयो । यहाँ विवाहको व्यवस्था कुटुम्बका अनुसार हुनु थियो , अर्थात समस्त हजरआमा हजुरबुबा एक अर्काका पति पत्नी हुन सक्थे । त्यसैप्रकार तिनीहरुका छोराछोरी अर्थात समस्त माता पिता एकअर्काका पतिपत्नी हुनसक्थे । सहोदर या काकाकाकीबाटका भाइबहिनी सबै सुविधा अनुरुप एक अर्काका पतिपत्नी हुनसक्थे । पछि गएर भाइ र बहिनीका बिच निषेध उत्पन्न गरियो । तर त्यो नवीन सम्बन्धको सुरुवात मन्दगतिमा गरियो र त्यसमा बाधा पनि धेरै थिए , किनकी समान उमेरका स्त्रीपुरुषको बिचमा यो एक अपरिचित सम्बन्ध थियो । यौटै आमाको गर्भबाट उत्पन्न सहोदर बहिनीबाट यस सम्बन्धको सुस्तरी-सुस्तरी विकास गरियो । परन्तु यसमा कतिको कठिनाइ थियो त्यो ऋग्वेदको यम-यमी सूक्तबाट स्पष्ट हुनेछ । यमकी बहिनी यमी आफ्नो भाइसँग प्रेम एवं सन्तानको याचना गर्दछे । तर यम यो भन्दै प्रस्ताव अस्वीकृत गरिदिन्छन् कि देवताहरुका श्रेष्ठ पहरेदार वरुणले कतै देखिहाल्लान् र रिसाउलान् । यसको विपरीत यमी भन्दछिन् कि उनले यसका लागि आफ्नो आशीर्वाद दिनेछन् । यस संवादको अन्त कसरी भयो यसका बारे त ऋग्वेद मौन छ तर यदि यो मानियो भने कि यमले यो प्रस्ताव अस्वीकृत गरे भने पनि यो स्पष्ट हुन्छ कि प्राचीन परिपाटी तोड्न कति कठिनाइको अनुभव भयो होला । '

-( Origin of Marriage by Dange )

यम-यमी सूक्त ऋग्वेद १०.१० र अथर्ववेद १८.१ मा आउँछ । डाँगे विदेशी विद्वान्‌हरूको अनुशरण गर्दै देखिन्छन् । यम-यमी सूक्तको मूलभाव भाइ-बहिनीको माध्यमबाट शिक्षा दिने हो । यम-यमी दिन र रात हुन् र दुवै जड छन् । यी दुवै जडलाई भाइ बहिनी मानेर वेदले एक धर्म विशेषको उपदेश दिएको छ । रूपक अलंकारले यी दुवैका बीच वार्तालाप छ । यम यमीसँग भन्छे कि तपाई मसँग विवाह गर्नुहोस् तर यम भन्छ कि -

बहिनीसँग कुत्सित व्यवहार गरेपछि पाप लाग्छ । पुराकालदेखि कहिल्यै भाइबहिनीको विवाह भएको छैन , त्यसैले तैले अर्कै पुरुषलाई आफ्नो पति बना । परमात्माले जड प्रकृतिको उदाहरण दिएर यो सूचित गरेका छन् कि यौटा जड स्त्रीको कथनमा जब परम्परागत शिक्षाले प्रेरित भएर पापको डरले एक जड पुरुषले पनि यस प्रकारको पापकर्मलाई नकार्न सक्छ भने चेतन ज्ञानवान् मनुष्यको लागि पनि यो आवश्यक छ कि पनि यसप्रकारको कर्म कहिल्यै नगरोस् ।

वेदहरूमा भाइ र बहिनीको व्यभिचारको यति कठोर दण्डको उल्लेख छ भने त्यसमा श्रीपाद डाँगेको यो कथन अज्ञानता मात्र हो ।

ऋग्वेद १०.१६२.५ र अथर्ववेद २०.१६.१५ मा आउँछ कि - जो तिम्रो भाइ तिम्रो पति भएर जार कर्म गर्छ र तिम्रै सन्तानलाई मार्छ भने , त्यसको हामी नाश गर्नेछौँ ।

अथर्ववेद २०.१६.५ मा आउँछ कि - यदि तिमी सुतिरहेकोबेला ( स्वप्न ) मा तिमीलाई तिम्रो भाइ या तिम्रा पिता बिर्सिएर पनि प्राप्त भए भने ती दुई गुप्त पापीहरू औषधी प्रयोगद्वारा नपुंसक बनाएर तुरुन्तै मारिनु पर्छ ।

श्रीपाद डांगेको यो कथन कि विवाह , नातागोता आदिबाट मनुष्य जाति वैदिक कालमा अनभिज्ञ थियो भन्नु चाहिँ अज्ञानता मात्र हो । ऋग्वेदको १०.८५ मा विवाह सूक्त , अथर्ववेद ४.१ , ७.३७ , ७.३८ मा पाणि ग्रहण अर्थात विवाह विधि , वैवाहिक प्रतिज्ञाहरू , पति पत्नी सम्बन्ध , योग्य सन्तानको निर्माण , दाम्पत्य जीवन , गृह प्रबन्ध एवं गृहस्थ धर्मको स्वरूप देख्न पाइन्छ जो शायद नै विश्वका अरु सभ्यतामा देख्न पाइयोस् ।

वैदिक कालका आर्यहरुको गृहस्थी विज्ञानको विशेषतालाई देखेर श्रीमती एन्नी बेसेन्टले लेख्नु हुन्छ कि - भूमण्डलको कुनै पनि देशमा , कुनै पनि जातिमा , कुनै पनि धर्ममा विवाहको महत्व यति गंभीर एवं यति पवित्र छैन जति प्राचीन आर्ष ग्रन्थहरुका पाइन्छ । यम-यमी सूक्त एक आदर्शलाई स्थापित गर्ने सन्देश हो न कि भाइ - बहिनीको बीच अनैतिक सम्बन्धको विवरण ।

शंका ४ : के अथर्ववेदमा वर्णित गर्भाधान , प्रसव विद्या आदिको प्रक्रियाको वर्णन अश्लील होइन ?

समाधान : सबै मनुष्यहरुको कल्याणार्थ ईश्वरद्वारा वेदहरुमा गृहस्थाश्रमको पालन हेतु एवं सन्तान उत्पत्ति हेतु अथर्ववेदको १४ औँ काण्डको २ सूक्तको ३१ , ३२ , ३८ र ३९ मन्त्रहरुमा गर्भाधानको प्रक्रियाको वर्णन छ । यो वर्णन ठिक यसप्रकारको छ कि जसरी चिकित्साको पुस्तकमा वर्णित होस् , जसलाई कसैले अश्लील मान्दैन । यसै प्रकार अथर्ववेदको पहिलो काण्ड ११ औँ सूक्तमा प्रसव विद्याको वर्णन छ । ग्रिफ्फिथ यी मन्त्रहरुलाई अश्लील मानेर अवांछनीय टिप्पणी गरिदिएका छन् । अब कसैले ग्रिफ्फिथजीसँग सोधोस् कि चिकित्सा विज्ञानमा जब अध्यापक आफ्ना विद्यार्थीहरुलाई प्रसव प्रक्रियाको बारेमा पढाउँछन् , तब के लिंग , योनि , गर्भ आदि शब्दरु अश्लील प्रतीत हुन्छन् ? उत्तर स्पष्ट छ - कदापि नाइ । अन्तर केवल मनोवृत्तिको छ । यी मन्त्रहरुमा कतै अनाचार , व्यभिचार आदिको वर्णन छैन र यही अन्तरले यिनलाई अश्लीलबाट श्लील बनाउँछ ।

## ५ के वेदमा आर्य-द्रविड युद्धको वर्णन छ ?

वेदहरुको विषयमा यौटा अर्को भ्रान्ति फैलाइएको पाइन्छ कि वेदहरुमा यस्तो वर्णन छ कि आर्यहरु विदेशी हुन् ( सम्भवत: मध्य एसिया मूलका ) र उनीहरु भारतभूमिमा आक्रमणकारीका रुपमा आएमा थिए । यहाँका मूलनिवाशीहरु काला रङ्गका थिए र तिनीहरुलाई आर्यहरुले दास या दस्यु नाम पनि दिएका थिए । यो पनि आरोप लगाइन्छ कि तिनीहरुमाथि आर्यहरुले धेरै अत्याचार पनि गरेका थिए । The aryan invaders or immigrants found in India to groups of people , one of which they named Dasas and Dasyus , and the others nishadas – Vedic Age p-156 अर्थात् आर्य आक्रमणकारीहरुले भारतमा दुई प्रकारका वर्गहरु पाए । एक वर्गहरुलाई उनीहरुले दास र दस्युको नाम दिए भने अर्को वर्गलाई निषादको नाम दिए । आर्य-द्रविड युद्धको मान्यतासँगै यो पनि भ्रान्तिको उत्पन्न हुन्छ कि दक्षिण भारतमा बस्ने एवं श्याम रङ्गका जनसमुदायलाई उत्तर भारतमा बस्ने श्वेत वर्णका समुदायले प्रताडित गरे एवं नानाथरी दु:ख दिए । त्यसैले यस भ्रान्तिको निवाररण हेतु केही प्रश्नमाथि विचार गर्नु आवश्यक छ ।

शंका १ : आर्य र द्रवीड शब्दको के अर्थ रहेको छ ? आर्य कसलाई भनिन्छ ? के आर्य र द्रविड या दास अलग अलग जातिहरु हुन् ।

समाधान : आर्य शब्द कुनै जातिवाचक शब्द होइन , परन्तु गुणवाचक शब्द हो । ऋग्वेद १०.६४.१ का अनुसार आर्य तिनालाई भनिन्छ जो भूमिमा सत्य , अहिंसा , पवित्रता आदि व्रतहरुलाई धारण गर्दछन् । आर्य शब्द ‘ ऋ ’ धातुबाट बन्दछ जसको अर्थ रहेको छ ‘ गति-प्रापणयो ’, अर्थात ज्ञान , गमन , प्राप्ति गर्ने तथा प्राप्त गराउनेहरुलाई आर्य भनिन्छ । यसबाट के बुझ्न सकिन्छ भने आर्य तिनीहरु हुन् जो ज्ञान-सम्पन्न छन् , जो सत्मार्गप्रति पुरुषार्थी छन् तथा जो ईश्वर तथा परमात्म प्राप्ति गर्न सदा प्रयत्नशील छन् । संस्कृत कोष शब्दकल्पद्रुममा आर्यको अर्थ पुज्य , श्रेष्ठ , धार्मिक , धर्मशील , मान्य , उदारचरित , शान्तचित , न्याय - पथावलम्बी , सत् कर्तव्य कर्मको अनुष्ठाता आदि पाइन्छ । आर्य शब्दको अर्थ हुन्छ श्रेष्ठ अथवा बलवान् , ईश्वरको पुत्र , ईश्वरका ऐश्वर्यका स्वामी , उत्तम गुणयुक्त एवं सद् गुणपरिपूर्ण आदि ।

वेद , रामायण , महाभारत , गीता आदिमा ‘ आर्य ’ शब्दको प्रयोग गुणवाचीको रुपमा भएको छ । आर्य शब्दको प्रयोग निम्नलिखित विशेषणहरुका लागि भएको छ ।

श्रेष्ठ व्यक्तिको लागि ऋग्वेद १.१०३.३ , ऋग्वेद १.१३०.८ , ऋग्वेद १०.४९.३ । इन्द्रको विशेषणको लागि ऋग्वेद ५.३४.६ , ऋग्वेद १०.१३८.३ । सोमको विशेषणको लागि ऋग्वेद ९.६३.५ । ज्योतिको विशेषणको लागि ऋग्वेद १०.४३.४ । व्रतको विशेषणका लागि ऋग्वेद १०.६५.११ । प्रजाको विशेषणको लागि ऋग्वेद ७.३३.७ । वर्णको विशेषणका लागि ३.३४.९ का रुपमा भएको छ ।

निरुक्तमा आर्य शब्दको प्रयोग ‘ ईश्वर पुत्र ’ का रुपमा भएको छ ।

रामायणको बालकाण्डमा आर्य शब्दको प्रयोग भएको छ। श्री रामका उत्तम गुणहरुको वर्णन गर्दै वाल्मीकि रामायणमा नारद मुनिले भन्नु हुन्छ कि -आर्यः सर्वसमश्चायम् , सोमवत् प्रियदर्शनः , रामायण बालकाण्ड १.१६ अर्थात् श्री राम आर्य , धर्मात्मा , सदाचारी , सबैलाई समान दृष्टिले हेर्नेवाला एवं चन्द्रामा झैं प्रिय दर्शन राख्नेवाला थिए ।

किष्किन्धा काण्ड १९.२७ मा बालीकी पत्नी आफ्नो पतिको हत्या वध भएपछि उसलाई आर्यपुत्र भन्दै रुन्छे ।

महाभारतमा आर्य शब्द आठ गुणले युक्त व्यक्तिका लागि आएको छ। जो ज्ञानी , सदा सन्तुष्ट रहनेलाला , मनलाई वशमा राख्नेवाला , सत्यवादी , जितेन्द्रिय , दानी , दयालु र नम्र गुणवाला हुन्छ उसलाई आर्य भनिन्छ ।

भगवद्गीतामा श्रीकृष्णले जब देख्नुभयो कि वीर अर्जुन आफ्नो क्षत्रिय धर्मबाट च्युत भएर मोहमा फस्दै छन् तब अर्जुनलाई सम्बोधित गर्दै श्रीकृष्णले भन्नुभएको छ कि ‘ कुतस्त्वा कश्मलमिदं विषमे समुपस्थितम् । अनार्यजुष्टमस्वर्ग्यमकीतिकरमर्जुन ’ गीता २.३ अर्थात , हे अर्जुन ! यी अनार्य या दुर्जनहरुद्वारा सेवित , नरकतर्फ लैजानेवाला , अपयश गर्नेवाला पाप यस कठिन समयमा तिमीलाई कसरी प्राप्त भयो ? यहाँ श्रीकृष्णले अर्जुनलाई आर्य बनाउनको लागि अनार्यत्वको त्याग गर्न भन्दै छन् ।

यस प्रकार वैदिक वाङ्मयमा आर्य शब्दको प्रयोग गुणहरूमा श्रेष्ठ व्यक्तिका लागि भएको छ ।

दास शब्दको अर्थ

दास शब्दको प्रयोग अनार्य , अल्पज्ञानी , अकर्मा , मानवीय व्यवहार शुन्य , भृत्य ,बल रहित शत्रुका लागि भएको छ , न कि कुनै विशेष जातिका मान्छेका लागि ।

दास शब्दको वेदहरुमा विविध रूपहरूमा प्रयोग -

मेघको विशेषणको रुपमा ऋग्वेद ५.३०.७ भएको छ। शीघ्र बन्ने मेघको लागि ऋग्वेद ६.२६.५ मा भएको छ। वृष्टि नहुने मेघका लागि ऋग्वेदमा ७.१९.२ यसको प्रयोग भएको छ। बलरहित शत्रुका लागि ऋग्वेद १०.८३.१ मा यसको प्रयोग भएको छ। अनार्यका लागि ऋग्वेद १०.८३.१९ मा यसको प्रयोग भएको छ। अज्ञानी , अकर्मा , मानवीय व्यवहार शुन्य व्यक्तिका लागि ऋग्वेद १०.२२.८ मा यसको प्रयोग भएको छ। प्रजाको विशेषणको लागि ऋग्वेद ६.२५.२ , १०.१४८.२ र २.११.४ मा यसको प्रयोग भएको छ। वर्णको विशेषणको रूपमा ऋग्वेद ३.३४.९ ,२.१२.४ मा प्रयोग भएको छ। उत्तम कर्महीन व्यक्तिका लागि ऋग्वेद १०.२२.८ मा दास शब्दको प्रयोग भएको छ , अर्थात् यदि ब्राह्मण पनि कर्महीन भयो भने दास कहलिन्छ । बोल्न नसक्ने लाटो या शब्दहीनको विशेषणको रूपमा ऋग्वेद ५.२९.१० मा दास शब्दको प्रयाग भएको छ । अष्टाध्यायी ३.३.१९ मा दास शब्दको अर्थ लेखिएको छ कि - दस्यते उपक्षीयते इति दासः , जसलाई साधारण प्रयत्नले क्षीण गराउन सकिन्छ त्यस्तो साधारण व्यक्ति तथा ३.१.१३४ मा आएको छ कि -‘ दासति दासते वा यः सः ’ अर्थात् दान गर्नेवाला । यहाँ दास शब्दको प्रयोग दान गर्नेवालाको रूपमा भएको छ। अष्टाध्यायी ३.१.१३४ मा दास्यति यः सः दासः अर्थात् जो प्रजालाई मार्दछ , त्यो दास हो । यहाँ दास प्रजालाई एवं उसका शत्रुलाई भनिएको छ । अष्टाध्यायी ५.१० मा हिंसा गर्नेवालालाई तथा गलत भाषण गर्नेवालालाई दास , दस्यु वा डाँकु भनिएको छ ।

निरुक्त ७.२३ मा कर्मको नाश गर्नेवालालाई दास भनिएको छ ।

दस्यु शब्दको प्रयोग उत्तम कर्महीन व्यक्ति ऋग्वेद ७.५.६ , अज्ञानी , अव्रती ऋग्वेद १०.२२.८ , मेघ ऋग्वेद १.५९.६ आदिका लागि भएको छ न कि कुनै विशेष जाति अथवा स्थानका व्यक्तिका लागि ।

वैदिक वाङ्मयमा राष्ट्रको लागि सहायक व्यक्तिहरुलाई आर्य एवं घातक व्यक्तिहरुलाई दास या दस्यु मानिएको छ । आर्य र द्रविडमा भेद व्यक्तिको गुण , कर्म र स्वभावको आधारमा बताइएको छ न कि उत्तर दक्षिण भारतीय , श्याम-श्वेत वर्ण , बाहिरबाट आएका एवं स्थानीय मूलनिवाशीका आधारमा मानिएका छ। यस विषयलाई ठिक प्रकारले बुझ्न नसकेका कारण पश्चिमी लेखकहरूले आर्यहरु बाहिरबाट आएको निराधार कल्पनालाई जन्म दिए । यस्तै आधा-अधुरो ज्ञानको आधारमा केही मानिसहरु आफ्नो छोटो राजनीति गरिरहेको देखिन्छन् । यो समाधान पढिसकेर आर्य-द्रविडको युद्धको कल्पना त्यागन योग्य छ ।

शंका २ : वेदहरुका मन्त्रहरु पढेपछि यस्तो प्रतीत हुन्छ कि आर्य र भारतका आदिवासी दुई अलग अलग जातिहरु थिए । आर्य र आदिवासीहरुको स्वरुप र धार्मिक विश्वास भिन्न भिन्न थियो ।

समाधान : पाश्चात्य विद्वानहरुले वेदहरुका अनुसार आदिवासीलाई काला वर्ण , अनास यानी चेप्टो नाकवाला र लिंगदेव अर्थात शिश्नदेवको पूजा गर्नेवाला भनेर लेखेका छन् , जबकी आर्यहरुलाई श्वेत वर्णवाला , सिधा नाकवाला र देवताहरुको पूजा गर्नेवाला भनेर लेखेका छन् ।

MacDonnel लेख्छन् the term Das/Dasyu properly the name of the dark aborigine . अर्थात् दास , दस्यु तथा काला रङ्गका समुदाय आदिवासी हुन् । Griffith Rigveda 1.10.1 – The dark aborigines who opposed the Aryans अर्थात काला वर्णका आदिवासीहरु जो आर्यहरुको विरोध गर्दथे । Vedic mythology 151,152 मा पनि आर्यहरुले कृष्णवर्णवाला ( काला वर्ण ) दस्युहरुलाई जितेर उनीहरुको भूमिमाथि अधिकार गरेको कुरा गरिएको छ । ऋग्वेदको १.१०१.१ , १.१३०.८ , २.२०.७ र ४.१६.१३ मन्त्रहरुको उदाहरण दिएर पनि यो सिद्ध गर्ने प्रयास गरिएको छ कि भारतका मूलनिवासी कृष्ण वर्णका थिए । ऋग्वेद ७.१७.१४ मा सायणले कृष्णको अर्थ कालो बादल गरेका छन् । अन्य सबै मन्त्रहरुमा यसै प्रकार इन्द्रको वज्रको मेघरुपी बादलसँगको संघर्षको वर्णन छ । बादलहरुको कालो रुपलाई काला वर्णका आदिवासीहरुसंग तुलना गरेर बिजुली ( इन्द्रको वज्र ) र बादल ( मेघ ) को संघर्षको मूल अर्थलाई लुकाएर त्यसमा आर्य - दस्यु युद्धको परिकल्पना गर्नु यौटा भ्रान्ति मात्र हो । वैदिक इन्डेक्सका लेखकले ऋग्वेद ५.२९.१० मा अनास शब्दलाई चेप्टो नाकवाला द्रविड आदिवासीको रुपमा व्याख्या गरेका छन् । ऋग्वेद ५.२९.१० मा अनास शब्दकलाई चेप्टो नाकवाला होइन परन्तु शब्द नगर्नेवाला मूक मेघ हो जसलाई इन्द्र आफ्नो वज्र ( बिजुली ) द्वारा छिन्न - भिन्न गरिदिन्छन् । यहाँ पनि आफ्नो कुटिलताले द्रविड या आदिवासीहरुलाई आर्यहरुबाट अलग देखाउने प्रयास गरिएको पाइन्छ ।

वैदिक इन्डेक्सका लेखकले ऋग्वेद ७.२१.५ र १०.९९.३ का आधारमा यो सिद्ध गर्ने प्रयास गरेका छन् कि दस्यु समुदायको पुजा-पद्धति फरक थियो र उनीहरु शिश्नपुजा अर्थात लिङ्ग पुजा गर्दथे ।

यास्काचार्यले निरुक्त ४.१९ मा शिश्नपुजाको अर्थ अब्रह्मचर्य अर्थात् जो कामी व्यभिचारी व्यक्ति होस् गएिको छ । ऋग्वेदको ७.२१.५ र १०.९९.३ मा पनि भनिएको छ कि अरुलाई पीडा पुर्याउने , कुटिल तथा शिश्नदेव (व्यभिचारी ) व्यक्ति हाम्रो यज्ञहरुमा प्राप्त नहोऊन् अर्थात् दुष्ट व्यक्तिहरु हाम्रा धामिक कार्यहरुमा प्रवेश नगरून् ।

वैदिक इन्डेक्सका लेखक यी मन्त्रहरुको गलत अर्थ गरेर यो भ्रान्ति उत्पन्न गर्दै छन् कि दस्यु समुदायहरु लिङ्गको पुजा गर्छन् एवं आर्यहरु उनीहरुभन्दा भिन्न पूजा पद्धति मान्नेवाला हुन् । परन्तु सत्य अर्थ यो हो कि दस्यु शब्द कुनै वर्ग विशेष या जातिको नाम होइन बरु जो पनि व्यक्ति दुर्गुणयुक्त छ , त्यो दस्यु हो र दुर्गुणी व्यक्ति कुनै पनि समुदायको होस् उसको दुर्गुण हटाउनु योग्य छ। वेदमन्त्रहरुको गलत अर्थ देखाएर यिनीहरुलाई भिन्न जातिहरुका रुपमा चित्रित गर्ने प्रयास जुन गरिएको पाइन्छ , त्यो परस्पर अन्तर्विरोधी एवं द्वेष भावनालाई बल दिनको लागि गरिएको एक षड्यन्त्र हो ।

शंका ३ : आर्य-दस्यु युद्धमा स्वामी दयानन्दको के दृष्टिकोण छ ।

समाधान : स्वामी दयानन्दले आर्यहरु बाहिरबाट आएको र स्थानीयहरुलाई युद्धमा परास्त गरेको तर्कको स्पष्ट खण्डन गर्नुहुन्छ । स्वामीजी सत्यार्थ प्रकाशमा लेख्नु हुन्छ कि -

' कुनै संस्कृत ग्रन्थमा वा इतिहासमा यो लेखिएको छैन कि आर्यहरु ईरानबाट आएका थिए र यहाँका जङ्गलीहरुसँग लडेर विजय प्राप्त गरेर उनीहरुलाई निकालेर यस देशको राजा भए'- सत्यार्थ प्रकाश , ८ समुल्लास , स्वामी दयानन्द ।

स्वामी दयानन्दजी आर्य र दस्युहरुको गुणका आधारमा विभाजन मान्दछन् ।

' जो आर्य श्रेष्ठ र दस्यु दुष्टहरुलाई मानिन्छ , म पनि यसै अनुरुप मान्दछु । '

स्वामीजी आर्यहरुको निवास स्थानलाई आर्यावर्त्तका रुपमा सम्बोधित गर्दै त्यसलाई भारतवर्ष मान्नुहुन्छ। स्वामीजी लेख्नहुन्छ कि -

' आर्यावर्त्त यस भूमिको नाम यसकारण छ किनभने यसमा आदि सृष्टिबाट आर्यहरुले निवास गरेका थिए , परन्तु यसको अवधि उत्तरमा हिमालय दक्षिणमा विन्ध्याचल पश्चिममा अटक र पूर्वमा ह्यपुत्र नदी हो । यी चारको बिचमा जति प्रदेश छ त्यसलाई आर्यावर्त्त भनिन्छ र जो यसमा सदा बसे तिनलाई पनि आर्य भनिन्छ , स्वमन्तव्य प्रकाश , स्वामी दयानन्द ।

आर्य र दस्युको बिचको सम्बन्धको बारेमा स्वामी दयानन्दद्वारा विशेष व्याख्या दिइएको छ । स्वामीजी ऋग्वेद १०.६४.११ मन्त्रको व्याख्या गर्दै लेख्नु हुन्छ - हे यथायोग्य सबैलाई जान्ने परमेश्वर ! तपाई ( आर्यान् ) विद्या-धर्म आदि उत्कृष्ट स्वभाव आचरणले युक्त आर्यहरुलाई जान्नुहोस ( ये च दस्येवः ) र जो नास्तिक , डाँकु , चोर , विश्वासघाती , मूर्ख , विषय-लम्पट , हिंसा आदि दोषयुक्त , उत्तम कर्महरूमा विघ्न गनेवाला , स्वार्थी -साधनमा तत्पर , वेद-विद्या-विरोधी अनार्य मनुष्य सर्वोपकारक यज्ञका विध्वंशक हुन् । यी सबै दुष्टहरुलाई तपाई ( रन्धय ) समूलान् विनाशय - मूल सहित नष्ट गर्नुहोस् र ( शासद्व्रतान्) ब्रह्मचर्य , गृहस्थ , वानप्रस्थ , सन्यास आदि धर्मानुष्ठान ब्रतरहित , वेदमार्ग उच्छेदक अनाचारीहरुलाई यथायोग्य शासन गर्नुहोस् ( शीघ्र उनीहरुमाथि दण्ड - निपातन गर्नुहोस् ) जसद्वारा उनीहरु पनि शिक्षायुक्त

भएर शिष्ट बनून् अथवा उनीहरुको प्राणान्त होस् कि त हाम्रो वशमा नै रहून् तथा जीवलाई परम शक्ति युक्त , शक्ति दिने र उत्तम कामहरुका प्रेरित गराउने होऊन् । तपाई हाम्रा दुष्ट कामहरुका विरोधक हुनुहोस् । म उत्तम स्थानहरुमा निवास गर्दै तपाईको आज्ञानुकुल सबै उत्तमकर्महरुको कामना गर्दछु जुन तपाई पुरा गर्नुहोस् । - आर्याभिविनय १.१४

स्वामी दयानन्द पनि आर्य - दस्युलाई गुणात्मक मान्नुहुन्छ न कि कुनै विशेष समुह वा जातिको वाचक ।

योगी अरविन्द पनि आर्य शब्दलाई गुणवाचक मान्नुहुन्छ । अरविन्द जीका अनुसार आय शब्दमा उदारता , नम्रता , श्रेष्ठता , सरलता , साहस , पवित्रता , दया , निर्बल संरक्षण , ज्ञानका लिए उत्सुकता , सामाजिक कर्तव्य पालनादि सबै उत्तम गुणहरु समावेश भइहाल्छन् । मानवीय भाषामा यो भन्दा अधिक उत्तम अरु कुनै शब्द छैन । आर्य आत्मसंयमी र आन्तरिक तथा बाह्य स्वराज्य प्रेमी हुन्छ । उनी अज्ञान , बन्धन तथा कुनै किसिमको दासतामा बस्न मन पराउँदैन । उसको इच्छा शक्ति दृढ हुन्छ । प्रत्येक वस्तुमा ऊ सत्य , उच्चता तथा स्वतन्त्रताको खोजी गर्दछ । आर्य एक कार्यकर्ता तथा योद्धा पनि हो जो आफभित्र र जगत्मा ईश्वरको राज्य ल्याउनको लागि अज्ञान , अन्याय तथा अत्याचार विरुद्ध युद्ध गर्दछ । - आर्य पत्रिका प्रथम अंक १९१४ ।

शंका ४ : के वेदहरुमा आर्य - द्रविड युद्धको वर्णन पाइन्छ ?

समाधान : वैदिक इन्डेक्स आदि लेखकहरुले यो सिद्ध गर्ने प्रयास गरेका छन् कि वेदहरुमा आर्य र दस्युहरुको युद्धको वर्णन छ । वेदहरुमा दाससँग युद्ध गरेको वर्णन त पाइन्छ तर त्यो युद्ध मानवीय नभएर प्राकृतिक युद्ध हो । जस्तै इन्द्र र वृत्रासुरको युद्ध । इन्द्र बिजुलीको नाम हो तथा वृत्र मेघको नाम हो । यी दुबैको परस्पर संघर्ष प्राकृतिक युद्ध जस्तो छ । यास्काचार्यले पनि निरुक्तमा इन्द्र-वृत्रको युद्धलाई प्राकृतिक मानेका छन् । त्यसैले वेदका जुन पनि स्थानमा आर्य - दस्यु युद्धको कुरा गरिएको छ ती स्थानहरुलाई प्रकृतिमा हुने कियाहरुको उपमाद्वारा दर्साइउको छ । तिनको वास्तविक अर्थलाई नबुझेर आज्ञानताले वा जानिबुझी वेदहरुलाई कलंकित गराउनको लागि एवं आर्य-दविडको विभाजन नीतिलाई पोषित गर्नको लागि युद्धको परिकल्पना गरिएको छ , जो सर्वथा मिथ्या हो ।

शंका ५ : डा. अम्बेडकरको यस विषयमा के विचार छ ?

समाधान : डा. अम्बेडकरले आफ्नो पुस्तक ‘ शुद्र कौन ’ Who were Shudras? मा स्पष्ट रूपमा विदेशी लेखकहरुको आर्यहरु विदेशबाट आएको भन्ने मान्यताको खंडन गरेका छन् । डा. अम्बेडकर लेख्नु हुन्छ कि -

१. वेदहरुमा आर्य जातिको बारेमा कुनै जानकारी छैन ।

२. वेदहरुमा यस्तो कुनै प्रसंग छैन जिसबाट यो सिद्ध हुन सकोस् कि आर्यहरुले भारतमा आक्रमण गरेर यहाँका मूलनिवासी दास-दस्युहरुलाई पराजित गरे ।

३. आर्य , दास र दस्युहरुको जातिगत विभेदलाई दर्साउने वेदमा कुनै साक्ष्य उपलब्ध छैन ।

४. वेदहरुमा यस मतको पुष्टि गरिएको छैन कि आर्य , दास र दस्युहरु भिन्न-भिन्न रंगका थिए ।

डा. अम्बेडकरले स्पष्ट रूपले स्वामी दयानन्दको मान्यताको अनुमोदन गरेका छन् । आर्य शब्दलाई उहाँ पनि जातिवाचक होइन गुणवाचक मान्नुहुन्थ्यो । यसै सन्दर्भमा उहाँले शुद्रलाई यसै पुस्तकको पृष्ठ ८० मा ' आर्य' नै मान्नुभएको छ । उहाँ आर्यहरुको बाहिरी आक्रमणको सिद्धान्तको स्पष्ट खण्डन पनि गर्नु हुन्छ । उहाँको उक्त पुस्तकको अध्ययनबाट यो पनि स्पष्ट हुन्छ कि उहाँ आर्य र दासलाई फरक पनि मान्नुहुन्नथ्यो । रंग , बनावट आदिको आधारमा आर्य र दस्युहरुको भेदलाई त उहाँले स्पष्ट खारेज नै गर्नुभएको छ ।

# वेद र देव

वेदहरुमा देवविषयक अनेक भ्रान्तिहरु विद्यमान छन् ।

शंका १ : देव शब्दबाट के अभिप्राय ग्रहण गर्न सकिन्छ ?

समाधान : ७.१५ निरुक्तमा यास्काचार्यका अनुसार देव शब्द दा , द्युति , दिवु धानुबाट बन्छ। यस अनुसार ज्ञान , प्रकाश , शान्ति , आनन्द तथा सुख दिने सबै वस्तुहरुलाई देव भन्न सकिन्छ। यजुर्वेद १४.२० का अग्नि , वायु , सूर्य , चन्द्र , वसु , रुद्र , आदित्य , इन्द्र इत्यादिहरुलाई देवको नामले पुकारिएको छ। तर पूजा गर्न योग्य केवल एक सर्वज्ञ , सर्वव्यापक भगवान् नै छन् । देव शब्दको प्रयोग सत्यविद्यालाई प्रकाश गर्नेवाला सत्यनिष्ठ विद्वान्हरुको लागि पनि गरिन्छ किनकी उनीहरु ज्ञानदान गरेर वस्तुहरुको यथार्थ स्वरुपलाई प्रकाशित गर्छन् । देव शब्दको प्रयोग विशेषतः जितने इच्छा राख्ने वीर , क्षत्रिय आदिको तथा परमेश्वरको स्तुति गर्ने एवं पदार्थको यथार्थ स्वरुपको वर्णन गर्ने विद्वान्हरु , ज्ञान दिएर मनुष्यहरुलाई आनन्दित गर्ने सच्चा ब्राह्मणहरु , प्रकाशक , सूर्य , चन्द्र , अग्नि , सत्य व्यवहार गर्ने वैश्यहरुको लागि पनि हुन्छ ।

शंका २ : वेदहरुमा ३३ देवहरु हुनुको के अभिप्राय रहेको छ ?

समाधानः वेदहरु एवं ब्राह्मण ग्रन्थहरुमा ३३ देवहरुको वर्णन पाइन्छ। ३३ देवहरुबाट प्रायः यो अभिप्राय निकालिन्छ कि वेद अनेकेश्वरवादी अर्थात एक भन्दा बढी ईश्वरको सत्तामा विश्वास गर्छ। वेदहरुमा पनि अनेक स्थलहरुमा ३३ देवहरुको वर्णन पाइन्छ। ईश्वर र देवबीचको अन्तर स्पष्ट भएपछि एकमात्र उपासना गर्न योग्य ईश्वर र कल्याणकारी देवहरुको बीचको अन्तर स्पष्ट हुन्छ। ४.५.७.२ शतपथका अनुसार ३३ देवहरुमा - १२ आदित्य , ८ वशु , ११ रुद्र , द्यावा , पृथ्वी तथा ३४ औं प्रजापति परमेश्वर स्पष्ट हुन्छन् । यही कुरालाई ताण्ड्य महाब्राह्मण र ऐतरेय ब्राह्मणका पनि भनिएको छ। शतपथका अनुसार ८ वसु हुन् - अग्नी , पृथ्वी , वायु , आकाश , अंतरिक्ष , सूर्य , चन्द्रमा र नक्षत्र। ११ रुद्रको तात्पर्य १० प्राण र ११ औं आत्मासँग छ , किनकी शरीरबाट निस्कदा यसले प्राणीहरुलाई रुवाउँछ। १२ आदित्यको तात्पर्य बाह्र महिनासँग छ , किनकी यिनीहरु हाम्रा आयुलाई मानौं प्रतिदिन लिइरहेका छन् । ३२ औं इन्द्र अथवा बिजुली हुन् एवं ३३ औं प्रजापति अथवा यज्ञ हुन् ।

शंका ३ : परमेश्वर र ३३ देवहरुमा के सम्बन्ध छ ?

समाधान : परमेश्वर र ३३ देवहरुबिचको सम्बन्धको वर्णन गर्दै भनिएको छ कि यी ३३ देवहरु जसको अंगमा स्थित छन् उसलाई स्कम्भ भनिन्छ ( सर्वाधार परमेश्वर ) भनो । उनै सबभन्दा अधिक सुखदायक छन्। यी ३३ देवले जसको निधिको रक्षा गर्छन् त्यो निधिलाई कसले जान्छ ? यी देव जुन विराट शरीरको अंगको समान बनेका छन् ती ३३ देवहरुलाई ब्रह्मज्ञानीले मात्र सत्यस्वरुपमा जान्दछ , अन्यले होइन । यी सबैमा पूजनीय त एकमात्र देवहरुका अधिदेव र प्राणस्वरुप परमेश्वर नै हुन् ।

वेदहरुका अनेक मन्त्रहरुको माध्यमले ईश्वरलाई देवहरुका पिता , मित्र, आत्मा , जनिता अर्थात् उत्पादक , अन्तर्यामी , अमरता प्रदान गर्नेवाला , कष्टहरुको हरण गर्नेवाला , जीवनाधार , देवहरु अर्थात सत्यनिष्ठ विद्वान्का मित्र आदिका रुपमा भनिएको छ। जस्तै -

१. जो श्रद्धापूर्वक देवहरुका पिता वा पालक ती ज्ञानका स्वामी परमेश्वरको उपासना गर्दछन् , उसको जन्म सफल हुन्छ। - ऋग्वेद २.२६.३

२. परमेश्वर सत्यनिष्ठ विद्वान्हरुका ( देव ) कल्याणकारी मित्र हुन्। - ऋग्वेद १.३१.१

३. परमेश्वर देवहरुका आत्मा हुन्। - ऋग्वेद ४.३.७

४.परमेश्वर सबै देवहरुका अन्तर्यामी आत्मा हुन्। - ऋग्वेद १०.१६८.४

५. परमेश्वर सबै देवहरुका अधिष्ठाता देव हुन्। - ऋग्वेद १०.१२१.८

६. परमेश्वर सबै देवहरुमा ठूला देव हुन्। - ऋग्वेद १.५०.९

७. ती परमेश्वर हाम्रा बंधु हुन्। - यजुर्वेद ३२.१०

८. जसरी वृक्षका शाखाहरु डाँठमा आश्रित हुन्छन् त्यसरी नै ती परमदेवको आश्रयमा अन्य सबै देवहरु रहेका हुन्छन्। - अथर्ववेद १०.७.३८

शंका ४ : स्वामी दयानन्दका अनुसार देवता शब्दको के अभिप्राय रहेको छ ?

समाधान : स्वामी दयानन्द देव शब्दमा विचार गर्दै ऋग्वेदादिभाष्यभूमिकामा लेख्नुहुन्छ कि दान दिने भएर देव नाम रहेको हो र दान अर्थात - आफ्नो वस्तु अरुलाई दिनु। दीपन .भनिन्छ प्रकाश गर्नुलाई , द्योतन भनिन्छ सत्योपदेशलाई। यिनमा दानको दाता मुख्य एक परमेश्वर मात्रै छन् , जसले जगत्का सबै पदार्थ दिएका छन् तथा विद्वान् मनुष्य पनि विद्यादि पदार्थका दाता भएकाले देव कहलिन्छन्। दीपन अर्थात समस्त मूतिमान् द्रव्यहरुलाई प्रकाशित गर्नेहुनाले सूर्यादि लोकहरुको नाम पनि देव रहेको छ। माता-पिता , आचार्य र अतिथि पनि पालन , विद्या र सत्योपदेशादि दिने भएकाले देव कहलिन्छन्। त्यसै गरेर सूर्यादि लोकहरुलाई पनि प्रकाश गर्नेवाला ती ईश्वर सबै मनुष्यहरुद्वारा उपासना गर्न योग्य इष्टदेव हुन् , अन्य कोही हैनन्।

कठोपनिषत् ५.१५ को पनि प्रमाण छ कि सूर्य , चन्द्रमा , तारा , बिजुली र अग्नि यी सबै परमेश्वरमा प्रकाश गर्न सक्दैनन् , किन्तु यी सबैलाई प्रकाशित गर्ने एक मात्र छन् र परमेश्वरको प्रकाशले मात्र यी सबै प्रकाशित छन्। यहाँ यो पनि जान्न योग्य छ कि परमेश्वरदेखि भिन्न कोही पनि पदार्थ स्वतन्त्र प्रकाश गर्ने छैनन्। यसबाट पनि स्पष्ट हुन्छ कि एक परमेश्वर मात्र मुख्य देव हुन्।

शंका ५ : वेदहरुमा एकेश्वरवाद अर्थात ईश्वर एक हुनुको के प्रमाण छ ?

समाधान : पश्चिमी विद्वान्हरु वेदहरुमा बहुदेववाद या अनेकेश्वरवाद मान्दछन्। उनीहरु त यहाँसम्म मान्दछन् कि वेदहरुले प्रारम्भिक अनेकेश्वरवादको कममा प्राकृतिक , एकेश्वरवाद र अद्वैतवादको तहसम्मको यात्रा गरेका छन्। यो एक कोरा कल्पना नै हो किनकी निष्मक्षरुपमा पढ्ने पाठकले ज्ञात गर्छ

कि वेदहरुका अनेक देवताहरुको वर्णन त पाइन्छ तर पूजाको विधान केवल देवाधिदेव सबै देवताका अधिष्ठाता एक ईश्वरको मात्र बताइएको छ । इन्द्र , मित्र , वरुण , अग्नि , यम , मातरिश्वा , वायु , सूर्य , सविता आदि प्रधानतया ती एकमात्र परमेश्वरको नै भिन्न-भिन्न गुणहरुलाई सूचित गर्ने नाम हुन् ।

वेदमंत्रहरुमा ईश्वर एक हुनुका अनेक प्रमाण छन् । जस्तै -

ऋग्वेद :

१. जो एक नै सबै मनुष्यहरु एवं वसुहरुका ईश्वर हुन् । - ऋग्वेद १.७.९

२. जो एक नै छन् र दानी मनुष्यहरुलाई धन प्रदान गर्छन् । - ऋग्वेद १.८४.६

३. जो एक मात्र छन् र मनुष्यहरुद्वारा पुकार्न योग्य छन् । - ऋग्वेद ६.२२.१

४. हे परमेश्वर ( इन्द्र ) , तिमी सबै जनहरुमा एक अद्वितीय स्वामी हौ , तिमी एक्लै नै समस्त जगका स्वामी पनि हौ । - ऋग्वेद ६.३६.४

५. हे मनुष्य , जो परमेश्वर एक मात्र छन् , उनको तिमी स्तुति गर , उहाँ सबै मनुष्यहरुका द्रष्टा हुनुहुन्छ । - ऋग्वेद ६.४५.१६

६. जो एक नै आफ्नो पराक्रमले सबैको ईश्वर बनेका छन् । - ऋग्वेद ८.६.४१

७. विश्वलाई रच्नेवाला यौटै देव छन् , जसले आकाश र भूमिलाई जन्म दिएका छन् । - ऋग्वेद १०.८१.३

८. हे दुष्टहरुलाई दंड दिने परमेश्वर , तपाईभन्दा अधिक उत्कृष्ट र तपाईभन्दा ठुलो संसारमा कोही छैन , तपाईको बराबरीमा पनि कोही छैन । - ऋग्वेद ४.३०.१

९. एक सत्यस्वरुप परमेश्वरलाई बुद्धिमान् ज्ञानी व्यक्तिहरुले अनेक नामद्वारा पुकार्छन् । उनैलाई उनीहरु अग्नि , यम , मातरिश्वा, इन्द्र , मित्र , वरुण , दिव्य , सुपर्ण इतयादि नामहरुले याद गर्छन् । - ऋग्वेद १.१६४.४६

१०. जो ईश्वर एक हुन् , हे मनुष्य ! तिमी उनको मात्र स्तुति गर । - ऋग्वेद ५.५१.१६

११. ऋग्वेदको १०.१२१ को हिरण्यगर्भ सूक्तमा प्रजापतिको नामबाट भगवान्को स्मरण गर्दै परमेश्वरका लागि चारपटक “ एक ” शब्दको प्रयोग भएको छ । यस सूक्तमा एकेश्वरवादको यति स्पष्ट शब्दमा प्रतिपादन भएको छ कि न चाहदा चाहदै पनि म्याक्स मुलर महोदय लेख्नुहुन्छ कि “ म ऋग्वेदको अर्को एक सूक्त १०.१२१ लाई जोड्न चाहन्छु जसमा एक ईश्वरको विचार यति प्रबलता र निश्चयताका साथ प्रकट गरिएको छ कि हामीलाई आर्यहरुलाई नैसर्गिक रुपमा एकेश्वरवादी हुनुलाई नकार्न पनि संकोच मान्नु पर्नेछ । ” ईसाई मतको पूर्वाग्रहले ग्रसित म्याक्स मुलरले त्यसपछि अर्को उपाय निकाले - एकेश्वरलाई सिद्ध गर्ने मन्त्रहरुलाई नवीन सिद्ध गर्ने प्रयास ।

यजुर्वेद

१. उहाँ परमेश्वर अचल हुनु हुन्छ , मनभन्दा पनि अधिक वेगवान् हुनुहुन्छ । - यजुर्वेद ४०.४

अथर्ववेद

१. पृथ्वी आदि लोकहरुलाई धारण गर्नेवाला ईश्वर हामीलाई सुख देऊन् , जो जगत्का स्वामी हुन् , एक छन् , नमस्कार गर्न योग्य छन् , धेरै सुख दिनेवाला छन् । - अथर्ववेद २.२.२

२. आओ , सबै मिलेर स्तुति वचनहरुद्वारा उहाँ परमात्माको पूजा गरौं , जो आकाशका स्वामी हुन् ,एक छन् , व्यापक छन् र हामी मनुष्यहरुका अतिथि हुन् । - अथर्ववेद ६.२ज्ञ.१

३.उहाँ परमेश्वर एक हुनुहुन्छ , एक हुनुहुन्छ , एक हुनुहुन्छ । उहाँको प्रतिस्पर्धामा कुनै दोस्रो , तेस्रो , चौथो परमेश्वर छैनन् । पाँचौ , छैठौं , सातौ छैनन् । आठौं , नवौ , दशौं छैनन् । उनै एक परमेश्वर चेतन - अचेतन सबैलाई देखिरहेका छन् । - अथर्ववेद १६.४.१६ - २०

यस प्रकार वेदमन्त्रहरुबाट सिद्ध हुन्छ कि परमेश्वर एक मात्र छन् ।

शंका ६ : म्याक्स मुलरद्वारा प्रचारित ( Henotheism ) मा के कमजोरीहरु छन् ?

समाधानः म्याक्स मुलरद्वारा प्रचारित हिनोथिइज्मका अनुसार प्रत्येक वैदिक कवि या ऋषिले जब जुन देवताको स्तुति गर्नलाग्छन् तब उनैलाई सर्वोत्कृष्ट बताउन लाग्छन् र उनीभित्र सबै सर्वोत्कृष्टतालाई समाविष्ट गर्ने प्रयत्न गर्छन् । वेदका अनेक यस्ता सूक्तहरु पाउन सुगम छ जहाँ प्रायः प्रत्येक देवतालाई सबैभन्दा ठूला र पूर्ण बताइएको छ। ऋग्वेदको द्वितीय मण्डलको प्रथम सूक्तमा अग्निलाई सबै मनुष्यहरुका बुद्धिमान् राजा , संसारका स्वामी र शासक , मनुष्यहरुका पिता , भाइ , पुत्र र मित्र भनिएको छ तथा अरु देवहरुका समस्त शक्ति र नाम स्पष्टतया उसका मानिएका छन् । म्याक्स मुलर महोदयले वेदहरुका अटल सिद्धान्तहरुलाई बुझ्न सकेनन् । वेदहरुकै अनुसार ईश्वरलाई इन्द्र , विष्णु , ब्रह्मा , ब्राह्मणस्पति , वरुण , मित्र , अर्यमा , रुद्र , पूषा , द्रविगोदा , सवितादेव र भग भनिएको छ र यी सबै नाम उनै एक अग्नि पदवाच्य सर्वज्ञ परमेश्वरका हुन् र उहाँकै गुणहरुलाई सूचित गर्छन् । जसरी परिवारमा एकै व्यक्तिलाई भिन्न भिन्न व्यक्तिले काका , पिता , हजुरबुवा , मामा आदि नामले बोलाउँदछन् , त्यसैगरि एक परमेश्वरका अनन्त गुणहरुलाई सूचित गर्नका लागि अनेक नामहरु प्रयुक्त गरिएका छन् । जब ज्ञानस्वरुपको रुपमा उसको स्मरण गरिन्छ तब उसलाई अग्नि भनिन्छ , उहाँको परमैश्वर्य सम्पन्नता देखाउनका लागि ब्रह्मा , ज्ञानको अधिपतित्व देखाउनको लागि ब्राह्मणस्पति , सर्वोत्तमता र पापनिवारकता सूचित गर्नको लागि वरुण ,सबैसँग प्रेम दर्साउने भएकाले मित्र , न्यायकारिताको लागि अर्यमा , दुष्टहरुलाई रुवाउने दर्साउनको लागि रुद्र , ज्ञानादि दिने भएकाले द्रविणोदा , प्रकाशस्वरुप भएकोले सविता आदि रहेको छ । अर्थात यी सबै नाम एक परमेश्वरका हुन् , जो विभिन्न गुणहरुलाई दर्साउँछन् ।

वेदहरुमा एक ईश्वरका विभिन्न नाम हुनुको साक्षी पनि दिइएको छ , जस्तै -

१. परमेश्वर एक मात्र हुनुहुन्छ । ज्ञानीहरु उहाँलाई विभिन्न नामले पुकार्छन् । उहाँलाई इन्द्र भनिन्छ , मित्र भनिन्छ , वरुण भनिन्छ , अग्नि भनिन्छ र उहाँलाई नै दिव्य सुपर्ण र गरुत्मान् पनि भनिन्छ । उहाँलाई नै यम र मातरिश्वा पनि भनिन्छ । - ऋग्वेद १.१६४.४६

२. यौटै हुँदा हुँदै पनि उहाँ सुपर्ण परमेश्वरलाई ज्ञानी कविजन धेरै नामले कल्पित गर्दछन् । - ऋग्वेद १०.११४.५

३. यही भाव ऋग्वेद ३.२६.७ , ऋग्वेद १०.८२.३ , यजुर्वेद ३२.१ , अथर्ववेद १३.४ मा पनि आउँछ ।

उदाहरणको लागि जसरी बाइबलमा ईश्वरलाई God , Almighty आदि विभिन्न नामले पुकारिएको छ , त्यसै प्रकारले वेदहरुमा ईश्वरलाई पनि विभिन्न नामले पुकारिएको छ । श्री अरवीन्द घोषले म्याक्स मुलर कथित हिनोथिइज्मको आलोचना पनि आफ्नो ग्रन्थमा गरेका छन् । यसप्रकारले यो सिद्ध हुन्छ कि वैदिक ईश्वर यौटै छन् एवं वेदले विशुद्ध एकेश्वरवादको सन्देश दिन्छन् । वेदहरुमा बहुदेववाद एक भ्रान्ति मात्र हो तथा वेद आदि शब्दहरु कल्याणकारी शक्तिहरुदेखि श्रेष्ठ मानवादिका लागि प्रयोग भएको छ । किन्तु उपासना योग्य केवल एक मात्र परमेश्वर छन् । ईश्वरका विभिन्न गुणहरुका कारण अनेक नामहरु हुन सक्छन् एवं अनेक देवहरुका पनि हुनसक्छन् ।

# ७ वेद र पुनर्जन्म

केही पाश्चात्य विद्वान्हरूको यो धारणा रहेको छ कि वेद पुनर्जन्मको सिद्धान्तको समर्थन गर्दैन । भारतीय लेखकहरू पनि पाश्चात्य लेखकहरूको अन्धो अनुशरण गरिरहेका देखिन्छन् । इसको एक कारण त वेदहरूलाई सूक्ष्मता पूर्वक नजान्नु नै हो भने अर्को कारण सबै पाश्चात्य विद्वान्हरू ईसाई मतका भएर पूर्वाग्रहले ग्रसित हुनु पनि हो । ईसाई मतले वेदहरूमा वर्णन गरिएको कर्मफल व्यवस्था र पुनर्जन्मलाई मान्दैन , त्यसैले उनीहरू वेदमा पुनर्जन्मको सिद्धान्तलाई मान्दैनन् ।

स्वामी दयानन्दले आफ्नो प्रसिद्ध ग्रन्थ ऋग्वेदादिभाष्यभूमिकामा पुनर्जन्मबारे वेदहरूबाट स्पष्ट प्रमाण दिनु हुन्छ । यसको अतिरिक्त अन्य विद्वान्हरूले पनि पुनर्जन्मको विषयमा अनेकौ प्रमाण दिएका छन् ।

१. हे सुखदायक परमेश्वर , तपाई कृपा गरेर पुनर्जन्ममा हामीमा उत्तम नेत्रादि सबै इन्द्रियहरू स्थापित गर्नुहोस् तथा मन , बुद्धि , चित्त ,अहंकार , बल , पराक्रम आदि युक्त शरीर पुनर्जन्ममा स्थापित गर्नुहोस् । - ऋग्वेद ८.१.२३.१

२. हे सर्वशक्तिमान् , तपाईको कृपाले हाम्रो लागि बारंबार पृथ्वी प्राणलाई , प्रकाश चक्षुकलाई अंतरिक्ष स्थानादि अवकाशहरूलाई दिँदै रहनु होस् । पुनर्जन्ममा सोम अर्थात् औषधिहरूको रस हामीलाई उतम शरीर दिनको लागि अनुकुल रहून् तथा पुष्टि गर्ने परमेश्वरले कृपा गरेर हरेक जन्ममा हामीलाई दुःख निवारण गर्ने पथ्यरूप स्वस्ति देऊन् । - ऋग्वेद ८.१.२३.२

३. हे सर्वज्ञ ईश्वर , जब जब हामी जन्म लिऔं , तब तब हामीलाई शुद्ध मन , पूर्ण आयु , प्राण , कुशलतायुक्त जीवात्मा , उतम चक्षु र श्रोत्र प्राप्त होऊन् । - यजुर्वेद ४.१५

४. हे जगदीश्वर , तपाईको कृपाले पुनर्जन्ममा मन आदि एघार इन्द्रिय मलाई प्राप्त होऊन् अर्थात् सर्वदा मनुष्य देह नै प्राप्त हुँदै गरोस् । - अथर्ववेद ७.६७.१

५. जो मनुष्य पुनर्जन्ममा धर्माचरण गर्छ , उक्त धर्माचरणको फलले अनेक उतम शरीर प्राप्त गर्छ भने अधर्मात्मा मनुष्य नीच शरीरलाई प्राप्त हुन्छ । - अथर्ववेद ५.१.१

६. जीवहरूलाई माता र पिताको शरीरमा प्रवेश गरेर जन्मधारण गराउनु , पुनः शरीरलाई छोडनु ,फेरि जन्म लिनु , बारम्बार हुन्छ । - यजुर्वेद १६.४७

७. तिमी शरीरधारी रूपमा उत्पन्न भएर अनेक योनीहरूमा अनेक प्रकारका मुखवाला पनि हुन्छौ । - अथर्ववेद १०.८.२७

८.यो जीवात्मा कहिल्यै कसैको पिता , कहिल्यै कसैको पुत्र , कहिल्यै ठूलो त कहिल्यै सानो हुन्छ । - अथर्ववेद १०.८.२८

९. मैले इन्द्रियहरूका रक्षक यस आत्माको साक्षात्कार गरे जो जन्म–मरणको मार्गबाट विचरण गरिरहन्छ । ऊ आफ्नो राम्रो-नराम्रो कर्मको अनुरूप प्रीतिपूर्वक अनेक योनीहरूमा संसारमा भ्रमण गरिरहन्छ । - ऋगवेद १.१६४.३

१०. हे जीवहरू ! तिमीहरू जब शरीर छोड्छौ तब यो शरीर दाहपछि पृथ्वी , अग्नि आदि र जलको बिच देह-धारणको कारणलाई प्राप्त र माताको उदरमा वास गरेर पुनः शरीरलाई प्राप्त हुन्छ । -यजुर्वेद १२.३८

११. जीव माताको गर्भमा बारम्बार प्रविष्ट हुन्छ र आफ्नो शुभकर्मानुसार सत्यनिष्ठ विद्वान्को घरमा जन्म लिन्छ । -अथर्ववेद १४.४.२०

यसैप्रकारले निरुक्तमा यास्कले पुनर्जन्मलाई मानेका छन् ।

१. मैले अनेकौ पटक जन्म-मरणलाई प्राप्त गरेर हजारौ गर्भाशयहरूको स्वाद गरे । निरुक्त १३.१९.१

२. अनेक प्रकारको भोजन गरेँ , अनेक माताहरूको स्तनपान गरेँ , अनेक माता-पिता र सुहृदहरूलाई देखेँ । - निरुक्त १३.१९.२

३.मैले गर्भमा तल मुख र माथि पद इत्यादि नाना प्रकारका पीडाहरूले युक्त भएर अनेक जन्म धारण गरेँ । -निरुक्त १३.९.७

दर्शनशास्त्र पनि पुनर्जन्मको समर्थन गर्छन् ।

१. हरेक प्राणीको यो इच्छा देख्न सकिन्छ कि म सदैव सुखी रहूँ , नमररूँ । म नहोऊ , यो इच्छा कोही पनि गर्दैन । यस्तो इच्छा पुनर्जन्मको अभावमा हुने थिएन । यो 'अभिनिवेश ' क्लेश कहलिन्छ जो कृमि (जुका)मा हुन्छ । यो व्यवहारले पुनर्जन्मको सिद्धि गर्छ । -योगदर्शन २.९

२. जो उत्पन्न अर्थात् शरीर धारण गर्छन् , उनीहरू मरण अर्थात् शरीरलाई छोडेर पुनरुत्पन्न अर्थात् अर्को शरीरलाई अवश्य प्राप्त गर्छन् । यसप्रकारले मरेर पुनर्जन्म लिनुलाई प्रेत्यभाव भनिन्छ । - न्यायदर्शन १.१.५९

गीतामा यौटा प्रसंग आउँछ कि जसरी मनुष्यले पुराना वस्त्र त्यागेर नयाँ वस्त्र धारण गर्छ , त्यसै प्रकारले आत्मा पनि पुरानो व्यर्थ शरीरलाई त्याग गरेर नयाँ भौतिक शरीरको धारण गर्छ । -गीता २.२२

यस प्रकार पुनर्जन्मको सिद्धान्तको समर्थन रामायण, महाभारत , उपनिषत् , पुराण आदि ग्रन्थले गरेको हामी पाउँछौं । पाश्चात्य विद्वान् तथा उनीहरूका अनुचरहरूलाई वेदमा पुनर्जन्म नभेटिनुको कारण वेदहरूको मूल अर्थ जान्न नसक्नु नै हो ।

शंका १ . के वेदहरूमा सोमरसको रूपमा रक्सी ( Alcohol ) अथवा अन्य कुनै मादक पदार्थको वर्णन छ ?

समाधानः पाश्चात्य विद्वान्‌हरूले सोमरसको तुलणा एक जडीबुटीसँग गरेका छन् जसको ग्रहण गर्दा नशा लाग्छ र वैदिक ऋषिहरू सोमरसको नशा गरेर मात्थे । मादक पदार्थको ग्रहण गर्नेहरू सोमरसको सहारा लिएर नशा गर्नु सही ठहऱ्याउँछन् । यस भ्रान्तिको मूल कारण सोम शब्दको सही अर्थ नजाँन्नु नै हो ।

शंका २ . स्वामी दयानन्दका अनुसार सोमको अर्थ के हो ?

समाधानः ऋषि दयानन्दले आफ्नो वेदभाष्यमा सोमको अर्थ प्रसंगानुसार ईश्वर , राजा , सेनापति , वैद्य , सभापति , प्राण , अध्यापक , उपदेशक इत्यादि गर्नुभएको छ । कुनै कुनै ठाउँमा त उहाँले यसको अर्थ औषधि , औषधि रस र सोमलता नामक औषधि विशेष पनि गर्नु भएको छ , तर सोमलाई सुरा या मादक पदार्थका रूपमा कतै ग्रहण गरिएको छैन ।

-आर्योका आदि देश और उनकी अवस्था , स्वामी विद्यानन्द - पृष्ठ २२१

स्वामी दयानन्द लेख्नु हुन्छ कि सोमरसको पान गर्नेको अंतरात्मामा विद्याको प्रकाश हुन्छ अर्थात् जो मनुष्य दिन र रात पुरुषार्थ गर्छन् उनीहरू नित्य सुखी रहन्छन् । - ऋग्वेद ५.३४.३

शंका ३ . योगी अरविन्दको सोमरसलाई लिएर के मत छ ?

समाधानः वेदका आध्यात्मिक व्याख्याकार श्री अरविन्दका अनुसार सोम आनन्दको रस र अमृतको रसको अधिपति हो । ऋग्वेद ९.८३ सूक्तको व्याख्या गर्दै उहाँले सूक्तमा सोम वर्णनलाई आलंकारिक बताउनु भएको छ । यस वर्णनमा सोमरसलाई छानेर शुद्ध गर्ने तथा कलशमा भर्ने भौतिक कार्यहरूसँग रूपक बाँधिएको छ ।

शंका ४ : वैदिक मन्त्रहरुमा सोम शब्दको प्रयोग कुन कुन अर्थमा भएको छ ?

समाधान : वैदिक मन्त्रहरुमा सोम शब्दको भिन्न-भिन्न मन्त्रहरुमा भिन्न-भिन्न अर्थहरु निस्कन्छन् । जस्तै -सोमलाई समस्त गुणयुक्त आरोग्यपन एवं बलदायक ईश्वर भनिएको छ । - ऋगवेद १.९१.२२

सोमको लताहरुलाई पति भनिएको छ । - ऋगवेद ९.११४.२

सोमको लागि सुपर्ण विशेषणको प्रयुक्त छ । - ऋगवेद ९.९७.३३

सोमको स्थिति द्युलोकमा बताइएको छ , यो पनि भनिएको छ कि त्यो १५ दिनसम्म बढ्छ र १५ दिनसम्म घटिरहन्छ । ऋगवेद १०.८५.१

ऋगवेद १०.८५.२ र १०.८५.४ मा पनि सोमको तुलना चंद्रमासँग गरिएको छ । ऐतरेय ब्राह्मणका अनुसार चन्द्रमालाई सोमको पर्याय बताइएको छ । तैतिरिय ब्राह्मणका अनुसार प्रभुभक्ति नै वास्तविक सोमपान हो जसको रसलाई पिएर प्रभुभक्त आनन्दित हुन्छ ।

ऋगवेद ६.४७.१ र अथर्ववेद १८.१.४८ मा भनिएको छ कि परब्रह्मको भक्तिरुप सोमरस अत्यन्त स्वादिष्ट छ , तीव्र र आनन्दले युक्त छ , जसले यस सोमको ग्रहण गरेको छ , उसलाई पराजित गर्न सकिन्न । ऋगवेद ८.९२.६ का अनुसार यस परमात्मासँग सम्बन्धित सोमरसको पान गरेर साधकको आत्मा अद्भूत ओज , पराक्रम आदिले युक्त हुन जान्छ , ऊ सांसारिक द्वन्द्वहरुबाट माथि उठ्छ ।

शंका ५ : के वेदहरुमा रक्सी या सुरा आदिको प्रयोगको अनुमति छ ?

समाधान : १- वेदहरुमा मनुष्यहरु हेतु सात मर्यादाहरुको पालनको आज्ञा निर्देश दिइएको छ - ( ऋगवेद १०.५.६ ) यी सात मर्यादाहरुमा कसैले कुनै मर्यादाको पालन गरेन भने पनि ऊ पापी भइहाल्छ । यी सात मर्यादाहरुमा एक मर्यादा "सुरापन नगर्नु "पनि हो । ( निरुक्तको नैगम काण्डका अनुसार चोरी , व्यभिचार , ब्रह्म-हत्या , गर्भपात , असत्य भाषण , पटक-पटक नराम्रो कर्म गर्नु तथा रक्सी पिउनु पनि हो ) ।

२- रक्सी पिउनेहरु मस्तसँग नग्न भएर एक-आपसमा झगडा गर्छन् तथा व्यर्थका कुरा गर्छन् । - ऋगवेद ८.२.१२

३- सुरा र जुवाले व्यक्ति अधर्मतिर प्रवृत्त हुन्छ । -ऋगवेद ७.८६.६

४- मांस , रक्सी र जुवा यी तीन निन्दनीय र वर्जित छन् । - अथर्ववेद ६.७०.१

५- शतपथ ५.१.२ का अनुसार सोम अमृत हो त सुरा विष हो , यस विषयमा विचार गर्नु पर्छ ।

जब वेदको स्वयंको साक्षी रक्सी खानबाट निषेध गरिरहेको छ भने कसरी वेद स्वयं वेदले स्वयं सोमरसको माध्यमले रक्सी खाने आदेश दिन सक्छ ?

हामीले सोमपान गर्यौ , हामी अमर भइहाल्यौ , हामीले ज्योतिको ग्रहण गरिसक्यौ , विविध दिव्यताहरुलाई हामीले गरिसक्यौ , हे अमृतमय देव ,मनुष्यको धूर्तता या शत्रुताले अब हामीलाई के गर्न सक्छ र । - ऋग्वेद ८.४८.३

यसप्रकार वेदहरुकै प्रमाणले यो सिद्ध हुन्छ कि सोम रस रक्सी आदि मादक पदार्थ होइन ।

# ९ के वेदहरुमा इतिहास छ ?

वेदका विषयमा यौटा शंका साधारण जनसमुदायमा हामी के देख्छौ भने वेदहरुमा इतिहास छ कि छैन ? केही हिन्दु सम्प्रदायहरुले वेदहरुमा श्री राम , श्री कृष्ण , श्री गणेश , विभिन्न देवी-देवता जस्तै इन्द्र , वरुण , अग्नी आदि देखि भौगोलिक पर्वत , राजाहरुको राज्य आदिको वर्णन मान्छन् । त्यस्तै विभिन्न मत-मतान्तरहरु आ-आफ्ना मत-प्रवर्तक जस्तै जैन मत मान्नेहरुले महावीर , कबीर पंथीहरुले कबीर साहिब , इस्लामीक मत मान्नेहरुले महम्मद साहिब , ईसाई मतवाला यीशू मसीह आदिको वेदमा वर्णन भएको मान्छन् । केही लेखकहरु त वेदमा गंगा , सरस्वती आदि नदीहरुको वर्णन भएको सम्म मान्दछन् ।

शंका १ . के वेदमा इतिहास भएको कुरा मान्नुमा केही आपत्ती छ र ?

उत्तर : वेद शाश्वत छन् । वेद परमात्माको नित्य वाणी हुन् । वेदहरुमा सृष्टि रचना , वेद रचना आदि नित्य - शाश्वत ) इतिहास हुन सक्छन् तर कुनै व्यक्ति विशेषको इतिहास हुन सक्दैन । यस सृष्टिको सुरुवातमा चारै वेदहरु ऋषिहरुको हृदयमा प्रकाशित भयो । ज्ञानको अर्को नाम नै वेद हो । वेदहरुका माध्यमले ईश्वरद्वारा समस्त मानव जातिलाई ज्ञान प्रदान गरियो जसको माध्यमले मनुष्यले आफ्नो उत्पत्तिको लक्ष्य प्राप्त गर्न सकून् । ईश्वरद्वारा यो ज्ञान जसरी वर्तमान सृष्टिमा प्रदान गरियो , त्यसरी पूर्वमा सृष्टिहरुमा पनि प्रदान गरियो र आगामी सृष्टिहरुमा पनि प्रदान गरिनेछ । जुन ज्ञान सृष्टिको सुरुवात परमात्माद्वारा मनुष्यलाई दिइयो , त्यसमा कदापि इतिहास हुनसक्दैन किनकी इतिहास कुनै पनि पुस्तकमा त्योभन्दा अधिका घटना र मनुष्यहरुको हुने गर्छ ।

ज-जसले वेदहरुमा श्री राम , श्री कृष्ण आदिको इतिहास भएको मान्दछन् , के उनीहरु यो पनि मान्नेछन् कि हरेक सृष्टिमा श्री रामले वनवासको कष्ट भोग्नु पर्यो ? के हरेक सृष्टिमा सीताको हरण भयो ? के हरेक सृष्टिमा कृष्णले कारागारमा जन्म लिनु पर्यो ? के हरेक युगमा यादव कुलको नाश भयो ? होइन , यो कदापि संभव छैन । ईश्वरद्वारा सबै सांसारिक वस्तुहरुको नाम वेदहरुबाट लिएर राखिएको हो , न कि यी नामधारी व्यक्तिहरु या वस्तुहरु पछि वेदहरुको रचना भएको हो । जसरी कुनै पुस्तकमा यदि यी पङ्क्तिहरुका लेखकको नाम आए ,त्यस लेखकको जन्म पछि उक्त पुस्तक लेखिएको ज्ञात हुन्छ । यस विषयमा मनुस्मृतिको प्रमाण छ :

सर्वेषां तु स नामानि कर्माणि च पृथक् पृथक्

वेद शब्देभ्य: एवादौ पृथक् संस्थाश्च निर्ममे ॥ - मनुस्मृति

अर्थात् ब्रह्माले सबै शरीरधारी जीवहरुको नाम तथा अन्य पदार्थहरुको गुण , कर्म , स्वभाव नामहरु सहित वेदहरुको अनुसार नै सृष्टिको प्रारम्भमा राखे तथा प्रसिद्ध गरे एवं उनीहरुको निवासार्थ पृथक् पृथक् अधिष्ठान पनि निर्माण गरे ।

शंका २ . वेदहरुमा इतिहास हुने विचार कसरी प्रचलित भयो ?

समाधान : वेदहरुमा सर्वानुक्रमणीहरु तथा बृहद्देवता आदि ग्रन्थहरुमा तथा सूक्तहरुका छन्द , ऋषि तथा देवताहरु ऋादिको परिगणन गरिएको छ । यी ग्रन्थहरुमा अनेक वेदमंत्रहरु तथा सूक्तहरुका साथ अनेक

कथाहरुको पनि सम्बन्ध जोडिएको छ । सायणाचार्य आदि भाष्यकारहरुले आफ्ना भाष्यहरुमा यिनै कथाहरुलाई आधार बनाएर वेदहरुमा इतिहासको भ्रम उत्पन्न गरिदिए । जहाँ पनि ती मन्त्रहरुमा भारतको इतिहासमा वर्णित कुनै प्राचीन ऋषि तथा राजाको नाम उल्लेख भेटियो , भाष्यकर्ता तिनै नामको आधार बनाएर यसरी कथाहरुको निर्माण गरिदिन्थे कि मानौं वेदमन्त्रहरुमा उनीहरुको जीवनवृत्तान्त-वर्णन होस् । यी कथाहरु पढेर न केवल अनेक भ्रमहरु उत्पन्न हुन्छन् , बरु यसबाट वेदहरुप्रति अनादर एवं अश्रद्धा पनि उत्पन्न हुन्छ । विदेशी विद्वान्हरु जस्तै म्याक्स मुलर , ग्रिफिथ आदिले आफ्नो पूर्वानुग्रह र अज्ञानतावश यी कथाहरुको उपयोग वेदहरुप्रति तुच्छता एवं सारहीनताको प्रचार हेतु गरेका छन् । वर्तमान भारतीय लेखकहरु पनि उनीहरुकै अनुशरण गर्दै वेदहरुप्रति अनास्था प्रदर्शन गर्न पछि पर्दैनन् । यो वेदहरुको दोष होइन बरु ती भारतीय वेदभाष्यकारहरुको एवं सर्वानुक्रमणीहरुका लेखकहरुको दोष हो , जसको अज्ञानताले वेदहरुमा इतिहास भएको मान्यता प्रचलित भयो ।

शंका ३ . स्वामी दयानन्दको यस विषयमा के मान्यता छ ?

समाधान : आधुनिक भारतमा स्वामी दयानन्द प्रथम चिन्तक हुन् जो वेदहरुमा इतिहासलाई मान्दैनन् । सत्यार्थ प्रकाशमा स्वामीजी लेख्नु हुन्छ - "इतिहास जसको हो , उसको जन्म पछि लेखिने गर्छ । त्यो ग्रन्थ पनि उसको जन्म पश्चात् हुन्छ । वेदहरुमा कसैको इतिहास छैन । तर जुन जुन शब्दले विद्याको बोध हुन्छ , त्यो त्यो शब्दको प्रयोग वेदमा गरिन्छ । कुनै विशेष मनुष्यको संज्ञा या विशेष कथाको प्रसंग वेदहरुमा छैन ।" ऋग्वेदादिभाष्यभूमिकामा पनि स्वामीजी लेख्नु हुन्छ -" यसबाट यो सिद्ध भयो कि वेदहरुमा सत्य अर्थहरुको वाचक शब्दहरुबाट सत्य विद्याहरुको प्रकाश गरिएको छ , लौकिक इतिहासको होइन । यसबाट जो सायणाचार्य आदि कृत टीकाहरुमा जहाँ इतिहास वर्णन गरेका छन् ती सब मिथ्या हुन् । "

यजुर्वेद ३.६२ को उदाहरण दिएर स्वामी दयानन्द सिद्ध गर्नुहुन्छ कि वेदहरुका संज्ञा यौगिक हुन् रुढ हैनन् । मंत्रहरुमा जमदग्नि , कश्यप आदि मुनिहरु र इन्द्रादि देवहरुको उल्लेख पनि पाइन्छ । अरु भाष्यकर्ताहरु यी मन्त्रमा इतिहासको खोजी गर्छन् किन्तु स्वामी दयानन्द जमदग्निबाट चक्षु , कश्यपबाट प्राण एवं देवबाट विद्वान् मनुष्यहरुको आशय प्रस्तुत गर्नुहुन्छ । स्वामीजी अर्थ गर्नुहुन्छ कि हाम्रा चक्षु र प्राण तिनगुण आयुवाला होऊन् र देव विद्वान्हरु जस्तै ब्रह्मचर्य आदिद्वारा .दीर्घ आयुलाई प्राप्त गर्छन् , ती हामीलाई पनि प्राप्त होऊन् । यही क्रमले स्वामी दयानन्दले सबै वेदमन्त्रहरुको भाष्य गर्नुभएको छ , जसमा इतिहासको कुनै वर्णन छैन । स्वामी दयानन्दले पुराना ऋषिमुनिहरुको पद्धतिलाई अपनाउनु भयो तथा व्याकरण , निरुक्त एवं ब्राह्मण ग्रन्थहरुको आधारमा यौगिक प्रक्रियालाई अपनाएर आफ्नो वेदभाष्यमा यो स्पष्ट गरिदिनु भयो कि वेदहरुमा व्यक्तिवाचक लाग्ने शब्द वस्तुतः विशेषणवाची हुन् तथा गुण-विशेषहरुको बोध गराउँछन् ।

शंका ४ : वेदहरुमा इतिहास छैन , केही उदाहरणहरुको माध्यमले आ-आफ्नो मान्यताको सिद्धि ।

समाधान : वेदहरुमा इतिहास सम्बन्धि भ्रान्ति हुँदा पाठकहरुलाई यो भ्रान्ति पनि हुन्छ कि वेदहरुमा अनेक मन्त्रहरुमा अश्लीलतको वर्णन भेटिन्छ । जस्तै प्रजापतिले आफ्नी छोरीसँग सम्बन्ध , त्यस्तै इन्द्र अहिल्याको कथा , मित्र-वरुण एवं उर्वशी अप्सरा आदिको कथाको समाधान यसै पुस्तकको अन्य स्थानमा दिइएको छ ।

वेदहरुमा इतिहास सम्बन्धि कथाहरु मन्त्रहरुमा भेटिन्नन् , परन्तु पुराण र अन्य ग्रन्थहरुमा भेटिन्छन् । मन्त्रमा भेटिने एक आध शब्दहरुलाई आधार बनाएर वेदका अनुक्रमणिकाकार र उनीहरुको अनुशरण गर्ने भाष्यकार कथा बनाइहाल्छन् । केही उदाहरण दिएर हामी यो सिद्ध गर्छौं कि वेदमा इतिहास मान्नू केवल भ्रान्ति हो ।

१. इन्द्र वृत्रासुरको कथा

मतवादी भाष्यकारहरु ऋग्वेद १.३२.१ - ७ का मंत्रहरुमा इन्द्र र वृत्रासुरको कथा बनाउछन् जसमा भनिएको छ कि त्वष्टाका पुत्र वृत्रासुरले देवहरुका राजा इन्द्रलाई युद्धमा निल्छ । तब सबै देवता भयले विष्णुको समीप पुगेर सहायता माग्छन् । तब विष्णुले उसलाई मार्ने उपाय बताउँछन् कि म समुद्रको फेनमा प्रविष्ट हुने छु। तिमीहरु त्यो फेन उठाएर वृत्रासुरलाई मार्नू , ऊ मर्नेछ ।

२. दधिचिको हड्डीहरुबाट वृत्र हननको कथा

ऋग्वेद १.८४.१३ को आधारमा यौटा कथा प्रसिद्ध छ कि एकपटक वृत्र नामक राक्षस सारा लोकमा उपद्रव मच्चायो । देवताहरु पनि उसँग थाकिसकेका थिए । तब सबै विष्णुको शरणमा गए । विष्णुले बताए कि दधीचि ऋषिको हड्डीले बनेको वज्रबाट वृत्रलाई मार्न सकिन्छ । तब देवताहरुको प्रार्थनामा दधीचिले आफ्नो शरीर त्याग गरिदिए । इन्द्रले उनको हड्डीहरुबाट वज्र तयार गरे जसबाट वृत्र मारियो ।

स्वामी दयानन्दका अनुसार यस मंत्रको आधिदैविक अर्थ यस प्रकार छ कि सूर्यलाई दधीचि भनिन्छ , उनका हड्डीहरु सूर्यका किरण तथा वृत्रको अर्थ मेघ हो । जब सारा भूमण्डलमा मेघ आच्छादित हुन्छ तब सूर्य आफ्ना किरणद्वारा मेघहरु छेदन गरेर वर्षा गराइदिन्छन् । यसको आध्यात्मिक अर्थ भने यसप्रकारको छ कि इन्द्रको अर्थ हो आत्मा , दधिचीको अर्थ हो मन , दधिचीका हड्डी हुन् उच्च मनोवृत्तिहरु र वृत्रको अर्थ हो पाप-वासनारुपी विचार । आत्मा आफ्नो मनको उच्च विचारहरुले पाप वासना आदि कुविचारहरुको नाश गरिदिन्छन् ।

३.देवापि -शन्तनुको कथा

ऋग्वेद १०.९८.७ का आधारमा एक कथा प्रचलित छ कि देवापि र शन्तनु दुई भाइ । शन्तनु साना थिए तर जसका कारण रिसाएर देवापि वन गएर तपस्या गर्न थाले , राजा शन्तनुको राज्यकालको १२ वर्षसम्म वर्षा भएन । उनले ब्राह्मणहरुसँग सोधे पछि उनलाई बताइयो कि राज्यप्रति अधिकार देवापिको थियो जसका कारण वर्षा हुन सकेको थिएन । शन्तनु वन गएर देवापिलाई फकाउने कोशिस गरे । तर शन्तनुले मानेनन् । अन्ततः उनी यज्ञको पुरोहित हुन स्वीकार गर्छ जसबाट वर्षा हुनसकोस् । त्यसपछि शन्तनुले देवापिलाई बोलाएर वृष्टि यज्ञ गराउँछ जसबाट राज्यमा पुष्कल वर्षा भयो । निरुक्त २.१२ का आधारमा शन्तनु शब्दको अर्थ हुन्छ जो राजा यस्तो प्रयत्न गर्छ कि उसको राज्यमा सबै सुख प्राप्त गरुन् , सब शरीरले निरोगी , प्रशन्न र सुखी होऊन् । त्यसै प्रकारले प्रजाहरु पनि यो चाहून् कि हाम्रो राजा स्वस्थ , सुखी , निरोगी हुँदै युगौसम्म जीवित रहून् , त्यस राजालाई शन्तनु भनिन्छ र देवापि अर्थात् त्यस गुणवाला व्यक्ति जसमा देवता समान गुणहरु होऊन् , उसलाई यज्ञको पुरोहित बनाएर वृष्टि यज्ञ गराउँदा यज्ञ सफल हुन्छ ।

पण्डित ब्रह्मदत्त जिज्ञासु यस मन्त्रको विशिष्ट अर्थ गर्नुहुन्छ । देवापि = विद्युत् जो मरुतहरुबाट उत्पन्न हुन्छ । उसको भाइ शन्तनु ( शरीरलाई शान्ति दिनेवाला ) उदक - जल हो । यहाँ वर्षा गराउनमा विद्युत्को महत्वलाई प्रकाशित गरिएको छ । यस्ता ऐतिहासिक कथालाई जोड्नाले वेदहरुको सही अर्थको लोप भएर निरर्थक कथा प्रचलित भयो ।

वेदहरुको सही अर्थ न जानेर इतिहासको ग्रहण गर्नुले वेदहरुको उच्च शिक्षामा बाधा दिन्छ । यही वेदहरुमा इतिहास मान्नुको ठुलो दोष हो ।

शंका ५. वेदहरुमा सरस्वती , गंगा , यमुना आदि नदीहरुको वर्णन पाइन्छ । यी नदीहरु भूगोलका विषय हुन् , न कि इतिहासका । वेदहरुपमा नदीहरुको अस्तित्व मान्नुमा के कठिनाई छ ?

समाधान : वेदहरुमा सरस्वती , गंगा , यमुना , कृष्ण आदि नदीहरुको वर्णन पाइन्छ । तर यी वस्तुहरु या वस्तुहरु या व्यक्तिहरुको नाम होइनन् । वेदहरुमा यिनीहरुको अर्थ अर्कै छ । वेदहरुको अर्थ जान्न हामीसँग ऋषिहरुका प्रमाण छन् । निघण्टुमा वाणीका ५७ नाम छन् , जसमा एक सरस्वती पनि छ । अर्थात् सरस्वतीको अर्थ वेदवाणी हो । ब्राह्मणग्रंथ वेदव्याख्याका प्राचीनतम ग्रन्थ हुन् । त्यहाँ सरस्वतीका अनेक अर्थ बताइएका छन् जसमध्य केही यस प्रकार छन् :

१. वाक् सरस्वती ॥ वाणी सरस्वती हुन् । - शतपथ ७.५.१.३१

२. वाग् वै सरस्वती पावीरवी ॥ पावीरवी वाग् सरस्वती हुन् । - शतपथ ७.३.३९

३. जिह्वा सरस्वती ॥ जिह्वालाई सरस्वती भनिन्छ । - शतपथ १२.९.१.१४

४. सरस्वती हि गौः ॥ वृषा पूषा ॥ गौ सरस्वती हुन् , अर्थात् वाणी , रश्मि , पृथ्वी , इन्द्रिय आदि । अमावस्या सरस्वती हुन् । स्त्री , आदित्य आदिका नाम सरस्वती हुन् । - शतपथ २.५.११

५. अथ यत् अक्ष्योः कृष्णं तर सारस्वतम् । आँखाको कालो अंश सरस्वती हो । - शतपथ १२.९.१.१२

६. अथ यत् स्फूर्जयन् वाचमिव वदन् दहति । अग्नि जब जल्दै आवाज निकाल्छ , त्यो अग्निको सारस्वत रुप हो । - ऐतरेय ३.४

७. सरस्वती पुष्टिः , पुष्टिपत्नी । सरस्वती पुष्टि हुन् र पुष्टिलाई बढाउनेवाली पनि । - तैतिरिय २.५.७.४

८. एषां वै अपां पृष्ठं यत् सरस्वती । जलको पृष्ठ सरस्वती हो । - तैतिरिय १.७.५.५

९. ऋक्सामे वै सारस्वतौ उत्सौ । ऋक् र साम सरस्वतीका स्रोत हुन् ।

१०. सरस्वतीति तद् द्वितीयं वज्ररुपम् । सरस्वती वज्रको दोस्रो रुप हो । - कौ १२.२

ऋग्वेद २६.१ सूक्तका देवता सरस्वती हुन् । स्वामी दयानन्दले यहाँ सरस्वतीको अर्थ विदुषी , वेगवती नदी , विद्यायुक्त स्त्री , विज्ञानयुक्त वाणी , विज्ञानयुक्त आर्या आदि गर्नु भएको छ । सरस्वती शब्दलाई एक विशेष नदी मानेर भाष्यकारहरु कुन भ्रममा छन् , जस्तै मानौ यौटा झुठलाई सिद्ध गर्न हजारौ झुठ बोलेजस्तै । यसको एक उदाहरण ऋग्वेद ७.९५.२ को यस मन्त्रबाट बुझ्न सकिन्छ :

एका चेतत् सरस्वती नदीनां शुचिर्यती गिरिभ्यः आ समुद्रात् ।

रायश्चेतन्ती भुवनस्य भूरेर्घृतं पयो दुदुहे नाहुषाय ॥

सायणाचार्यले यहाँ सरस्वतीलाई एक विशेष नदी मान्दै स्वयं कल्पनाको घोडामा चढ्नु भएको छ। उहाँ यसको अर्थ यसप्रकारले गर्नुहुन्छ - (नदीनां शुचिः ) नदीहरुमा शुद्ध ( गिरिभ्यः आसमुद्रात् यती ) पर्वतहरुबाट समुद्रतिर जाँदै ( एका सरस्वती ) एक सरस्वती नदीले ( अचेतत् ) नाहुषको प्रार्थना जानिन् र ( भुवनस्य भूरेः रायः चेतन्ती ) प्राणीहरुलाई धेरै जसो धर्म सिकाउँदै ( नाहुषाय घृतं पयो ददुहे ) नाहुष राजाको एक हजार यज्ञका लागि पर्याप्त दुध दिइन् ।

यहाँ नहुषको अर्थमा विचार नगरेका कारण यस्तो इतिहासको कल्पना गर्नुपर्यो । निघण्टु २.३ का अनुसार मनुष्यका २५ पर्यायहरु छन् जसमध्ये एक नहुष पनि हो । घृतं , पयः वेद विद्या हुन् । - शतपथ ब्राह्मण ११.५.७.५

आर्ष वेदार्थ शैलीका अनुसार यस मन्त्रको अर्थ यस प्रकार छ -

(एका नदी शुचिः गिरिभ्यः आसमुद्रात् यती ) जसरी एक नदी पर्वतहरुबाट शुद्ध जल भएकी समुद्रसम्म जाने बुझिन्छ , त्यसै गरि ( सरस्वती एका ) एक अद्वितीय सर्वश्रेष्ठ उत्तम ज्ञानयुक्त प्रभुवाणी ( गिरिभ्यः ) ज्ञानोपदेष्टा गुरुहरुबाट ( आ समुद्रात् ) जनसमूहरुप सागरसम्म प्राप्त हुने बुझिन्छ । अर्थात् पर्वत-सागरसदृश गुरुहरुबाट मनुष्यहरुले ज्ञान प्राप्त गरुन् । ती ( भुवनस्य भूरे चेतन्ती ) संसार र जन्तु जगत्लाई प्रभूत ऐश्वर्यको ज्ञान गराउँदै ( नाहुषाय ) मनुष्य मात्रलाई ( घृतं पयः दुदुहे ) प्रकाशमय , पान गर्न योग्य रस तुल्य ज्ञानको रसलाई बढाउँछन् ।

प्रकरणवश अर्को एक मन्त्रमा विचार गर्न उचित रहन्छ , जसमा गंगा आदि दश नदीहरुको नाम बताइएको छ ।

इमं मे गंगे यमुने सरस्वति शुतद्रि स्तोमं सचता परुष्ण्या ।

असिक्नया मरुद्वृधे वितस्तयार्जीकीये शृणुह्यासुषोमया ॥ - ऋग्वेद १०.७५.५

स्वामी दयानन्दका अनुसार इडा , पिंगला , सुषुम्णा र कुर्मनाडी आदिको गंगादि संज्ञा छ रहेको छ । योगका धारणा आदिको सिद्धिको लागि र चित्तलाई स्थिर गर्नको लागि यिनीहरुको उपयोगिता स्वीकार गरिएको छ । यी नामहरुबाट परमेश्वरको पनि ग्रहण हुन्छ । उहाँको ध्यान दुःखको नाशक र मुक्ति प्रदायक हुन्छ । यस मंत्रको प्रकरणपूर्व पनि ईश्वरको अनुवृत्ति छ ।

यी प्रमाणहरुबाट सिद्ध हुन्छ कि वेदमा सरस्वती आदिको उल्लेख धर्तीको कुनै स्थान विशेषमा बग्ने नदीको रुपमा आएको छैन । न त वेदमा सरस्वती नामले कुनै व्यक्तिगत इतिहासको व्याख्यान छ । सरस्वती नदीको ऐतिहासिकतालाई वेदद्वारा प्रमाणित गर्ने प्रयास वेदहरुको अवमूल्यन गर्नु नै हो ।

यही नियम वेदमा वर्णित विभिन्न नामहरु , विभिन्न स्थलहरु , नदीहरु आदिहरुमा पनि लागु हुन्छ , जसद्वारा केही व्यक्तिहरु वेदमा इतिहास भएको कल्पना गर्छन् ।

## १०　　　के ऋग्वेदको दशम मण्डललाई पछि मिलाइएको हो ?

केही पश्चिमी लेखकहरुको यो मत छ कि ऋग्वेदको दशम मण्डल पछि मिलाइएको हो एवं अर्वाचीन रचना हो । उनीहरुको यस मान्यताको आधार दशम मण्डलको भाषिकह-भिन्नता हो ।

शंका १ : पश्चिमी लेखकहरुको मान्यता कि ऋग्वेदको दशम मण्डल पछि मिलाइएको हो , यसको आधार के हो ?

समाधान : पश्चिमी लेखक मेकडोनेलद्वारा आफ्नो पुस्तकमा यस मान्यताको समर्थनमा केही युक्तिहरु दिइएका छन् :

१. ऋग्वेदको दशम मण्डलको भाषा केही भिन्न छ ।

२. मन्यु तथा श्रद्धाजस्ता केही अमूर्त विचारहरुको अधिकता छ ।

३. विश्वदेवाको प्रधानता भएको छ ।

४. उषा देवीको मान कम देखिन्छ ।

५. २०-२६ सूक्तहरुको कर्ता अग्नीमिलेले आरम्भ गर्छन् , अतः पहिला ९ मण्डल .पुस्तकरुपमा पनि आइसकेका थिए ।

६. किनकी यो सोम अध्याय पछि राखिएको छ ।

७. किनकी यसका सूक्तहरुको संख्या प्रथम मण्डलसँग बराबर छ ।

८. यहाँसम्म कि दशम मण्डलका सूक्त , अन्य मण्डलमा गरिएका मिलावटभन्दा अधिक प्राचीन प्रतीत हुन्छन् ।

अनेक भारतीय विद्वान्हरु पनि यस विचारलाई मान्छन् ।

ऋग्वेदको दशम मण्डल स्पष्टतया पछिको मिलावाट हो जसमा अथर्ववेदझैं जादू-टोनाका कुरा पाइन्छन् ।

दशम मण्डल पूर्वका ९ मण्डलको अपेक्षा पछि बनेको हो । यो कुरा यस मण्डलको भाषाद्वारा पूर्णतया निश्चित् छ ।

ऋग्वेदको दशम मण्डल अर्वाचीन मानिन्छ ।

ऋग्वेद मण्डल १० , सूक्त ९० मंत्र ११, १२ को पुरुष सूक्त आफ्नो भाषा र भावनाले अर्वाचीन प्रतीत हुन्छ ।

दशम मण्डलमा लोक , मोघ , विसर्ग , गुप् इत्यादि अनेक शब्द आउँछन् जो प्रक्षिप्त भाग र बालखिल्य सूक्त बाहेक ऋग्वेदको अन्य कुनै भागमा देखिदैनन् ।

शंका २ : यस मान्यतालाई तपाई सही मान्नुहुन्छ या गलत मान्नु हुन्छ ?

समाधान : पश्चिमी लेखकहरुको मान्यतालाई विश्लेषण गर्दा हामीले यो पायौ कि वास्तवमा यस मान्यताको समाधान शुष्क एवं दुरुह छ , किनकी यो भाषावैज्ञानिकहरुको विषय हो । अधिक जानकारीको लागि शोधमा रुचि राख्नु हुने विद्वान् पण्डित भगवत दत्त रिसर्च स्कोलर , पण्डित शिवपूजन सिंह , पण्डित धर्मदेव विद्यामार्तण्डद्वारा कृत लेख एवं पुस्तकहरु हेर्न सकिन्छ ।

यस लेखमा हामी केवल लोक , मोघ , विसर्ग आदि शब्दहरुको विश्लेषण गर्नेछौं ।

' लोक ' शब्दमा विचार

लोक शब्द ऋग्वेदको दशम मण्डलको अतिरिक्त ऋग्वेद १.९३.६ , २.३०.६ , ३.२.९ , ४.१७.१७ , ६.२३.७ , ६.४७.८ , ६.७३.२ , ७.२०.२ , ७.३३.५ , ७.६०.९ , ७.८४.२ , ७.९९.४ , ८.१००.१२ , ९.९२.६ आदि मन्त्रहरुमा आएको छ भने यो अयथार्थ एवं तथ्यविरुद्ध कुरा कसरी मान्न सकिन्छ कि लोक शब्द केवल दशम मण्डलमा आएको छ भनेर ।

' मोघ ' शब्दमा विचार

मोघ शब्दको प्रयोग ऋग्वेदको दशम मण्डलको अतिरिक्त ऋग्वेदको सप्तम मण्डलमा दुई मन्त्रहरु ७.१०४.१४ ,७.१०४.१५ मा पनि भेटिन्छ भने यो अयथार्थ एवं तथ्य विपरीत कुरा कसरी लेख्न सकिन्छ ?

'विसर्ग' शब्दमा विचार

विसर्गको प्रयोग ऋग्वेदको दशम मण्डलको अतिरिक्त ऋग्वेदको सप्तम मण्डलका १०३ सूक्तहरुमा भेटिन्छ भने यो अयथार्थ एवं तथ्य विपरीत कुरा कसरी लेख्न सकिन्छ ?

पण्डित सत्यव्रत जी सामश्रमी त्रयीपरिचय ग्रन्थमा भाषा भेदको मान्यताको स्पष्ट रुपले निराकरण गर्दै लेख्नुहुन्छ कि हामीले सुन्दा त दशम मण्डल र अरु मण्डलको भाषा एकै किसिमको छ तथा हाम्रो बुद्धिमा उनीहरुको तात्पर्य पनि एकै किसिमको छ ( अन्य मण्डलहरुभैँ ) । हामीलाई थाहा छैन कि कसको बुद्धि मलिन छ र कसको हठी छ ? शंका ३ : पश्चिमी लेखक वेदहरुमा पछि मिलावट भएको कुराबाट

शंका ३ : पश्चिमी लेखक वेदहरुमा पछि मिलावट भएको कुराबाट के सिद्ध गर्न चाहन्छन ?

समाधान : पश्चिमी लेखकहरुको वेदमाथिको मान्यता ईसाई मतको पूर्वाग्रहले ग्रसित छ । यिनै मान्यताहरुको प्रवाहमा वेदहरुमा बहुदेववाद , वेदहरुमा इतिहास , वेदहरुमा जादु टोना , विकासवाद आदिलाई बलपूर्वक सिद्ध गर्ने प्रयास गरिएको छ । वेदहरुलाई जङ्गली समुदायहरुको निकृष्ट मान्यता एवं बाइबललाई सभ्य मानिसहरुको उच्च मान्यता सिद्ध गर्ने असफल प्रयास यही प्रदुषित सोंचको परिणाम थियो । जब उनीहरुले ऋग्वेदको दशौं मण्डलमा हिरण्यगर्भ सूक्तमा प्रतिपादित एकेश्वरवाद , नासदीय सूक्त आदिमा ईश्वरद्वारा सृष्टि उत्पत्ति एवं पालन , श्रद्धा सूक्त , मन्यु सूक्तादिमा आध्यात्मिक , दार्शनिक र मनोवैज्ञानिक विषयहरुलाई देखे तब उनीहरुले वेदको एकेश्वरवाद आदि स्वस्थ विषयलाई पन्छाउनको

लागि यौटा उपाय सोचे । जस-अन्तर्गत यी मंडलहरुलाई पछि बनाइएको प्राचार गरियो । भाषा-भेद त यौटा बहाना मात्र थियो । उदाहरणको लागि हामी म्याक्स मुलरको मान्यताको विश्लेषण गर्छौं ।

हिरण्यगर्भ सूक्तलाई म्याक्स मुलर महोदयले युरोपियन व्याख्याकारहरुद्वारा नवीन भएको बताएका छन् । यस सूक्तको अन्तिम मन्त्र ' प्रजापते त त्वदेतात्यन्यो विश्वा जातानि परि ता बभूव ' मा म्याक्स मुलर महोदय लेख्नुहुन्छ कि मेरो विचारमा यो अन्तिम मन्त्र अत्यन्त सन्दिग्ध छ ।

सत्य यो हो कि ऋग्वेदको यस सूक्तमा एकेश्वरवाद अर्थात ' ईश्वर एक छन् ' मन्त्रलाई देखेर म्याक्स मुलर ईसाईमत जन्य पक्षपातको सिकार हुनुभयो । तर पनि वेदका अनेक मण्डलहरुमा ' ईश्वर एक हुनुका 'का यथेष्ट प्रमाण छन् ।

शंका ४ : के वेदहरुमा मिलावट गर्न सकिन्छ ?

समाधान : वेद नित्य ईश्वरको नित्य ज्ञान हो । त्यसकारण वेदहरु जसरी यस कल्पमा आज उपलब्ध छन् त्यसरी नै सृष्टिका पहिलेका कल्पमा पनि अनादिकालदेखि ईश्वरद्वारा प्रकट गरिँदै गएका थिए र पछिका कल्पमा पनि यही क्रमले प्रकट गरिने छन् । स्वामी दयानन्द यस विषयमा स्पष्ट रुपमा लेख्नुहुन्छ कि ' जसरी यस कल्पको सृष्टिमा शब्द , अक्षर र सम्बन्ध वेदहरुमा छ , त्यसैप्रकारले पूर्वकल्पमा पनि थिए र पछिका कल्पमा पनि हुनेछन् , किनकी जुन ईश्वरको विद्या हो सो नित्य एक रस बनी रहन्छ । त्यसमा एक अक्षरको पनि विपरीत भाव हुँदैन । त्यसैले ऋग्वेदादि चारै वेदका संहिता आज जुन रुपमा छन् , यिनमा शब्द , अर्थ , सम्बन्ध , पद र अक्षरको जुन क्रम रहेको छ , यसै प्रकारको क्रम सर्वथा रहन्छ । किनकी ईश्वरको ज्ञान नित्य छ । त्यस ज्ञानको वृद्धि , क्षय र विपरीतता कहिल्यै हुँदैन ।

यस तथ्यलाई पाणिनिले अष्टाध्यायीमा पनि नित्य मानेका छन् । ' वेदमा स्वर तथा वर्णानुपूर्वी पनि नित्य हुन्छन् ' । निरुक्तमा यास्कले पनि वेदमंत्रहरुको शब्द रचना र त्यसको आनुपूर्वीलाई नियत मानेका छन् ।

वेदहरुको नित्यता पछि वेदहरुको शुद्धताको रक्षाको प्रबन्ध पनि यति वैज्ञानिक छ कि त्यसप्रति आक्षेप लगाउन असंभव छ । क्रमको अतिरिक्त जटा , माला , शिक्षा , लेखा , ध्वजा , दण्ड , रथ , घन यी आठ प्रकारले वेदमन्त्रहरुको उच्चारणको विधान रहेको छ । यस पाठ्यक्रमको विधान ऐतरेय आरण्यक , प्रातिशाख्यादिमा पनि उल्लेख छ । वेदहरुको अनेक शुद्ध पाठलाई सुरक्षित राख्नको लागि यसै प्रकारले अनुक्रमणीहरु पनि पाइन्छन् ।

विदेशीहरुदेखि स्वदेशी विद्वान्हरु वेदहरुको शुद्धताको रक्षाप्रति मोहित भएर आफ्ना विचार लेख्छन् -

म्याक्स मुलर महोदय -Ancient Sanskrit Literature Page 117 मा लेख्नु हुन्छ कि - ऋग्वेदको अनुक्रमणीहरुबाट यसका सूक्त र पदहरुको जाँच गर्दा हामी निर्भिकताका साथ भन्न सक्छौं कि अहिले पनि ऋग्वेदका मन्त्र , शब्द र पदहरुको संख्या त्यही छ , जुन कात्यायनको समयमा थियो ।

वेदहरुको पाठ हामीहरुका सामु यति शुद्धताका साथ स्थापित छन् कि सायदै कुनै पाठ भेद वा स्वर भेद सम्पूर्ण ऋग्वेदमा भेट्न सकियोस् । Origin of Religion Page 131

मक्डोनेल महोदय - A History of Sanskrit Literature page 50मा लेख्नुहुन्छ कि - आर्यहरुले प्राचिन कालदेखि असाधारण सावधानीपूर्वक वैदिक पाठको शुद्धता राख्न र त्यसलाई परिवर्तित वा नाश हुनबाट बचाउनका लागि उपयोग गरेका छन् । यो यति शुद्धताका साथ सुरक्षित राखिएको छ कि साहित्यिक इतिहासमा यो अनुपम रहनेछ ।

यसप्रकार पश्चिमी विद्वान् वेदहरुमा पछिको कालमा गरिएको मिलावटको स्वयं खण्डन गर्दै आफ्नो परिकल्पनालाई स्वयं गलत सिद्ध गरेको हामी पाउँछौँ ।

## वैदिक विचारधारालाई स्वामी दयानन्दको अभिनव देन

वेदहरुलाई अज्ञान , आलस्य , प्रमाद , उदासीनता र घोर उपेक्षाको अन्धकारमय गर्तबाट निकालेर सर्वसाधारणसम्म सुलभ गराउने श्रेय आधुनिक भारतका महान वेदोद्धारक , प्रचारक , चिन्तक , सत्य अन्वेषी , महान् पुरुषार्थी स्वामी दयानन्दलाई जान्छ । स्वामी दयानन्दको प्रथम देन जनमानसमा प्रायः लुप्त भइसकेका वेदहरुलाई सुलभ गराउनको लागि चालिएको भागीरथ प्रयास हो । मध्यकालको अन्धकारमय युग एवं विदेशी आक्रमकहरुको अत्याचारका कारण वेदहरु केही परिवारसम्म मात्र सीमित भइसकेका थिए । स्वामी दयानन्दले सर्वप्रथम यो सिद्ध गर्नु भयो कि चार मंत्र संहिता नै वेद हुन् भनेर । अन्य वेदका शाखाहरु , ब्राह्मण , उपनिषद् , दर्शन आदि ग्रन्थहरु हुन् जो मनुष्यकृत हुन् एवं वेदहरुको मूल अर्थ जान्न सहायक छन् ।स्वामी दयानन्दको अर्को अभिनव देन लुप्त प्रायः हुन लागेको संस्कृत भाषामा उपलब्ध वेदहरुलाई साधारणजनहरु माँझ पुर्याउने उद्देश्यले वेदहरुको आर्य ( हिन्दी ) भाष्य गर्नु रहेको छ । यस महान प्रयासद्वारा एक सामान्य ज्ञानवाला व्यक्ति पनि जो चिरकालदेखि भाषा भेद व्याप्त वेदहरुको अनुपम ज्ञानबाट वञ्चित थियो , वेदहरुको पुष्कल सामग्रीको लाभ उठाउन लायक भयो ।

स्वामी दयानन्दको तेस्रो अभिनव देन भनेको वेदहरुलाई अव्यावहारिक कर्मकाण्ड ग्रन्थको सीमित परिभाषबाट निकालेर त्यसलाई वैज्ञानिक एवं पारमार्थिक विद्याहरुको ग्रन्थको रुपमा स्थापित गर्नु थियो । स्वामीजीले यसप्रकारले वेद आधारित यज्ञहरुलाई पशु बलि एवं हिंसा आदिबाट मुक्त गरेर न केवल वेदहरुलाई निर्दोष सिद्ध गर्नुभयो परन्तु निरीह पशुहरुमाथि दया गरेर स्वयंलाई दयानन्द सिद्ध गर्नुभयो ।

स्वामीजीको वेदहरुलाई चौथो अभिनव देन यो सिद्ध गर्नु थियो कि वेद व्यक्ति र परिवारको व्यावहारिक जीवन चलाउनका लागि आवश्यक ज्ञान दिनुका साथ-साथै ठूला-ठूला राष्ट्र र विश्वराष्ट्र चलाउनको लागि पनि उपदेश प्रदान गर्छन् । वेदमा शिक्षा शास्त्र , समाज शास्त्र , गृहस्थ शास्त्र , राजनीति शास्त्र , आयुर्वेद शास्त्र तथा अनेक प्रकारका ज्ञानहरु रहेका छन् । स्वामीजीको यस विशिष्ट प्रयासद्वारा वेदहरुका प्रति संसारको दृष्टिकोण एक वीभत्स कर्मकाण्डको पुस्तकबाट बदलिएर एक महान् आध्यात्मिक ग्रन्थको रुपमा स्थापित भएको छ । स्वामी दयानन्दको पाँचौ अभिनव देन वेदहरुलाई ईश्वरीय ज्ञान सिद्ध गर्नु थियो । स्वामीजीले वेदमन्त्रहरुको अनुपम भाष्यद्वारा वेदहरुलाई व्यवहार अनुकूल , युक्ति संगत एवं तर्कपूर्ण सिद्ध गर्नुभयो । स्वामीजीको यस प्रयासद्वारा वेदहरुको गलत परिभाषा झल्काउने भाष्यहरु पढेर नास्तिकताको भुमरीमा फसेकाहरुमा पनि आस्तिकताको प्रचार भयो । स्वामीजीद्वारा दिइएका तर्क र उपायहरुको अनुशरणद्वारा नै व्यक्ति सत्य अर्थसम्म पुगेर तिनको लाभ उठाउन सक्छ ।

स्वामीजीको छैठौं अभिनव देन यो सिद्ध गर्नु थियो कि वेद कुनै इतिहासको पुस्तक होइन जसमा राजाहरुको कथा , राज्य आदिको वर्णन होस् । यस प्रकार वेदहरुलाई गपोडा आदि भन्नेहरुलाई प्रत्युत्तर दिएर स्वामीजीले सत्यको प्रकाश गर्नुभयो ।

स्वामी दयानन्दद्वारा वेदहरुको आध्यात्मिक , आधिभौतिक एवं आधिदैविक विधाहरुबाट भाष्य गरेर वेदहरुलाई सत्य विद्या एवं महान् ग्रन्थहरुका रुपमा स्थापित गरिनु मनुष्य समाजमाथि सबैभन्दा ठूलो उपकार रहेको छ । यस उपकारका लागि हामी उहाँको कृतज्ञ एवं आभारी छौं ।

- डा. विवेक आर्य

## सहायक ग्रन्थहरु


ऋग्वेदादिभाष्यभूमिका - स्वामी दयानन्द सरस्वती

ऋग्वेद भाष्य - स्वामी दयानन्द सरस्वती

यजुर्वेद भाष्य - स्वामी दयानन्द सरस्वती

अथर्ववेद भाष्य प्रकाशक - विश्वनाथ वेदालंकार , रामलाल कपुर ट्रष्ट

अथर्ववेद भाष्य - क्षेम करण द्विवेदी

शतपथ ब्राह्मण , ताण्ड्य महाब्राह्मण , ऐतरेय ब्राह्मण , गोपथ ब्राह्मण

निरुक्त , निघंटु

कठोपनिषत्

मनुस्मृति

अष्टाध्यायी

शब्दकल्पद्रुम

रामायण , महाभारत

बृहदारण्यक उपनिषत् , छान्दोग्योपनिषत्

न्याय दर्शन

भागवत पुराण

भविष्य पुराण

विष्णु पुराण

ब्रह्म पुराण

सत्यार्थ प्रकाश - स्वामी दयानन्द सरस्वती

वेदों का यथार्थ स्वरुप - पण्डित धर्मदेव विद्या मार्तण्ड

वेद और उसकी वैज्ञानिकता भारतीय मनीषा के परिप्रेक्ष्य में - आचार्य प्रियव्रत वेद वाचस्पति

आर्यो का आदि देश और उनकी सभ्यता - स्वामी विद्यालंकार सरस्वती

आर्ष ज्योति - पण्डित रामनाथ वेदालंकार

सत्यार्थ भाष्कर भाग १ , २ -स्वामी विद्यानन्द सरस्वती

वेद और वेदार्थ - डा. ज्वलन्तकुमार शास्त्री

आर्य समाज का इतिहास - भाग १- ७ : सत्यकेतु विद्यालंकार

वर्ण व्यवस्था का वैदिक रुप - लाला ज्ञान चंद्र आर्य

वैदिक वर्णाश्रम व्यवस्था - धर्मेन्द्र नाथ शास्त्री

वैदिक यज्ञ पशु यज्ञ मीमांशा - प्रोफेसर विश्वनाथ विद्यालंकार

स्वाध्याय संदोह - स्वामी वेदानन्द तीर्थ

वर्णाश्रम धर्म - पंडित जनमेजय वेदालंकार

वर्णव्यवस्था - श्रोत्रिय शंकरलाल

मानव समाज व्यवस्था - पंडित देवप्रकाश

जातिनिर्णय - पंडित शिव शंकर शर्मा काव्यतीर्थ

जातिभेद - पंडित गंगा प्रसाद चीफ जज

वैदिक नारी - पण्डित रामनाथ वेदालंकार

वेदों मे स्त्री अधिकार - पण्डित धर्मदेव विद्यामार्तण्ड

वेदों मे इतिहास नहीं - वेदरत्न डा. सत्यव्रत राजेश

अथर्ववेदीय मन्त्रविद्या - प्रियरत्न आर्य

वेदों पर अश्लीलता का व्यर्थ आक्षेप - स्वामी सत्यप्रकाश

वेद रहस्य - योगी अरविन्द

ऐतरेयालोचन -पंडित सत्यव्रत सामश्रमी

आर्याभिविनय - स्वामी दयानन्द सरस्वती

स्वमन्तव्यामन्तव्यप्रकाश - स्वामी दयानन्द सरस्वती

पूना प्रवचन , उपदेश मञ्जरी : स्वामी दयानन्द सरस्वती

व्यवहारभानु - स्वामी दयानन्द सरस्वती

The myth of holy cow- D.N Jha

Vedas – The Myth and reality – Pt Dharma Dev Vidya Martand

The vedic age

The Rig Ved – Ralph T H Griffith 1896

The Brahma samaj and Arya Samaj in the bearing of Christianity : - A study of Indian Theism by Frank Lillingston ( 1901 )

On the Religion and Philosophy of the Hindus by Henry thoma Colebrooke ( 1858 )

History on Ancient Sanskrit Literature by Maxmuller

Vedic hymns by Max Muller

Ancient sanskrit literature by Max muller

Who were Shudras ? – Dr. BR Ambedkar

Women in Vedas by ShakuntalaRao

Dayanand Bankim Tilak by Shri Arvind

Chips from a German Workshop – Max Muller